प्रकाशक
स्वामी बोधसारानन्द
अध्यक्ष, अद्वैत आश्रम
मायावती, चम्पावत, उत्तराखण्ड, हिमालय
कोलकाता स्थित प्रकाशन विभाग द्वारा प्रकाशित
Email: mail@advaitaashrama.org
Website: www.advaitaashrama.org


पहिलो प्रकाशन, जुलाई २०१२
3M3C

ISBN 978-81-7505-357-1

मुद्रक
शान्ति पैकर्स
कोलकाता ७०० ००९



# प्रकाशकीय

ई.सं १८९३ मा अमेरिकाको शिकागो शहरमा विश्वधर्म महासभाको आयोजना भएको थियो । उक्त वर्षको सेप्टेम्बर ११ देखि २७ गते सम्म चलेको त्यो सम्मेलनको पहिलो दिन अर्थात् सेप्टेम्बर ११ ले भने विश्वको धार्मिक इतिहासमा एउटा विशेष महत्व राख्दछ। धर्मको तत्कालीन अवस्था र भावीस्वरुपबारे छलफल गर्न उक्त भेलामा जम्मा भएका संसारभरका विभिन्न धर्म र सम्प्रदायका विशिष्ठ प्रतिनिधिहरूले सम्बोधनका क्रममा केवल आ-आफ्नै धर्म र मतको महत्ता र गरिमामाथि प्रकाश पार्दै रहनुभयो तर भारतका युवा संन्यासी स्वामी विवेकानन्द - जो कुनै मुलुकको औपचारिक प्रतिनिधि हुनुहुन्नथ्यो -- सम्पूर्ण सहभागीहरूका अलग-अलग आस्था, छरपष्ट विचार र अभिव्यक्तिहरूलाई संश्लेषण गरेर विश्व धर्मबारे त्यसअघि स्थापित र प्रचलित मान्यताहरूमा आमूल परिवर्तनको शंखघोष गर्दै सर्वस्वीकृत एउटा नवीन एवं व्यावहारिक सार्वभौम मान्यताको प्रस्ताव अघिसार्नुभयो जसलाई उपस्थित जनसमुदायले करतल ध्वनीका साथ समर्थन र स्वीकृति प्रदान गऱ्यो ।

आजभन्दा करिब सवासय वर्षअघि उहाँको सम्बोधनमा व्यक्त भएका कुरा आज पनि उत्तिकै ताजा र प्रभावपूर्ण पाइन्छन् । एकआपसमा हिंसा, द्वेष, कलह र मनोमालिन्य बढ्दै गएका छन् । मनुष्यले आफू मनुष्य हुनुको मूल्य नै गुमाइसकेको हो कि भन्ने प्रतीत भइरहेको छ । एक मनुष्यले अर्को मनुष्यप्रति गर्नुपर्ने व्यवहारको कला भुल्दै गएको छ । व्यक्तिवादिताको अत्यन्त संकुचित घेरामा खुम्चदैं गएकोले मनुष्य मनुष्यबीच विश्वासको शंकट पैदा भइरहेको छ । यस्तो विषम विश्व परिस्थितिमा उहाँका सम्बोधनमा व्यक्त भएका युगान्तकारी विचारहरूको स्मरण, अध्ययन, मनन र तिनलाई व्यावहारिक रुप दिनसके उहाँले कल्पना गरेको विश्व निर्माण हुनेछ जहाँ प्रत्येक प्राणीमा रहेको एउटै आत्मा ईश्वरका रुपमा प्रस्फुटित भै यो पृथ्वी साँच्चै स्वर्ग बन्नेछ ।

वतर्मान समाजलाई सही मागर्तर्फ डोऱ्याउने उद्देश्यले स्वामी  विवकोनन्दको १५०औं जन्म दिवसको पुनित अवसरमा हामी उहाँका सम्बोधनमा व्यक्त भएका

अनमोल विचारहरूका प्रस्तुत शिकागो भाषण नामक यस लघु पुस्तिकालाई नेपाली भाषामा अनुवाद गरी प्रकाशन गर्न गइरहको छौं । यदि यस पुस्तिकाले कुनै एक व्यक्ति को हृदयमा मात्र पनि उहाँ प्रति श्रद्धाभाव जगाउनमा र उहाँ बारे अरु बढी जान्न, बुझ्न् मा मद्दत पुऱ्यायो भने हामी आफनो परिश्रम सफल भएको ठान्नेछौं ।

यो कृतिको अनुवाद लेखनका लागि श्री भीमनाथ घिमिरे, अधिवक्ता, नेपाल साथै, यो कृतिका लागि दविलो पहल र परिश्रम गनर्हुने डा. श्री जगदीश घोषजीलाई पनि हार्दिक आशीवार्द ।

# एक परिब्राजक सन्यासी ११८ वर्षअघि अमेरिका पुगे

**रोमा रौंला** : प्रस्तुत यात्रा वास्तवमा आश्चर्यदायी थियो । युवा स्वामी नचिनेको नजानेको बाटोमा विना कुनै हिच्किचाहट आँखा चिम्लिएर हिंडिरहेका थिए । उनले यति मात्र सुनेका थिए अमेरिकामा कुनै दिन, कुनै ठाउँमा सर्वधर्म सम्मेलन हुन गइरहेको छ र उनले त्यहाँ जाने निश्चय गरे । न उनले न त भारतीय मित्रहरू, विद्यार्थीहरू, पण्डितहरू, मन्त्री एवं महाराजहरूले नै यसबारेमा जान्ने बुझ्ने प्रयत्न नै गरे । न उनलाई ठीक ठीक तिथि मितिको थाहा न त त्यसमा सम्मिलित हुनका लागि औपचारिक शर्त एवं बन्देजहरूबारे कुनै ज्ञान नै थियो । उनले आफूसंग कुनै प्रकार को एउटा प्रमाणपत्रसम्म पनि लिएर गएका थिएनन् । उनी एउटै आत्म विश्वासका साथ सरासर निस्किदिए कि ठीक समयमा वहाँ पुग्न सके हुन्छ । खेतडीका राजाले उनलाई जहाजको टिकट लिई दिएका थिए तथा इन्कार गर्दागर्दै पनि एउटा सुन्दर लामो दौरा (अंगरखा =Tunic) दिलाइ दिएका थिए र अमेरिकी ठालूहरूका माझ उक्त पोशाकमा सजिएका उनको वाक् शक्तिले सबैलाई मन्त्र मुग्ध गराइदियो । तर उनी स्वयंलाई तथा उनका कुनै पनि हितचिन्तकलाई त्यहाँको हावापानी र रीतिरिवाजको अलिकति पनि ज्ञान थिएन । उनी आफ्नो भव्य भारतीय पोशाकमा क्यानडा नपुगुञ्जेल जहाजमा ठण्डिले वरफ जमेझैं कठ्याइङ्गिएका थिए ।

उनी ३१ मई, १८९३ मा बम्वईबाट हिँडे । श्रीलंका, पेनांग, सिंगापुर, हङ्कङ् अनि क्यानटोन हुँदै नागासाकी पुगे । यहाँबाट उनी स्थलमार्गबाट योकोहामा, ओसाका हे र्दै क्योटो र टोकियो पुगे । सर्वत्र उनको ध्यान हरहमेशा त्यही कुरातर्फ खिचिइरहेको हुन्थ्यो जसले उनका यिनै कल्पना एवं मान्यताहरूलाई नै पुट प्रदान गरिरहेका हुन्थे कि पूर्वका सम्पूर्ण धर्मउपर भारतीय प्रभाव व्याप्त छ र त्यो नै एशियाको धार्मिक एकताको द्योतक पनि हो । एक साथै जुन जुन दुःष्कृतिहरूद्वारा उनको मुलुक त्रसित थियो त्यो उनको मनबाट हटेर जान सकेन र त्यसमा पनि जापानले गरेको प्रगति देखेर त उनको त्यो घाउलाई अझै बल्झाइदियो ।

उनी योकोहामाबाट भ्यानकूवर गए तथा त्यहाँबाट रेलद्वारा जुलाईको मध्यतिर किंकर्तव्यविमूढ अवस्थामा शिकागो पुगे । बाटोभरि लुटेराहरूले उनलाई च्यात्चुत र लछारपछार पार्दै लथालिङ्ग अबस्थामा पुऱ्याई दिएका थिए मानौं उनी कुनै नयाँ शिकार हुन् उनीहरुका लागि । टाढैबाट पनि उनलाई चिन्न सकिन्थ्यो ।

उनको दिमाग त्यतिबेला चक्करायो जव उनले बौद्ध सम्राटको स्मृतिमा निर्मित चिनी मन्दिरहरूमा प्राचीन बंगला लिपीमा लेखिएको पाण्डुलिपिहरू देखे । यस प्रकार जापानमा उनले प्राचीन बंगला लिपिमा संस्कृत मंत्र लेखिएको देखे ।

पहिले त उनले वच्चाको झैँ आँखा तन्काएर, मुख अचम्भित पार्दै शिकागो को औद्योगिक विश्व प्रदर्शनीमा घुम्दै र हेर्दै हिंडे । प्रत्येक वस्तु उनका लागि आश्चर्य चकित पार्ने खालका थिए । उनले पाश्चात्य जगतको शक्ति, समृद्धि तथा आविष्कार क्षमतावारे यस्तो कल्पना कहिल्यै गरेका थिएनन् । यूरोपीय-अमे रिकनहरू जो अमेरिकाको विक्षिप्त गति तथा हल्लाखल्लादेखि विशेष रुपमा त्रसित थिए रविन्द्र नाथ ठाकुर तथा महात्मा गान्धीको तुलनामा ती भन्दा अधिक बल( वान विवेकानन्दको शक्तितर्फ बढी आकर्षित भए । यसैले शुरुमा त कम से कम उनलाई यो सहज झैँ लाग्यो । उनी एक किशोरका झैँ त्यहाँको उत्तेजक नशाको प्रभावमा परे तथा उनमा प्रशंसाभाव चुलियो । बाह्र दिनसम्म उनका आँखाले यो दुनियाँको सराहना गर्दै रहे । शिकागो पुगेको केही दिनपछि उनलाई यो स्मरण हुन आयो कि विश्व प्रदर्शनीको सूचना केन्द्रबाट सर्वधर्म सम्मेलन हुने तिथि मितिका बारेमा पत्ता लगाऊँ । जब उनलाई थाहा भयो त्यो सेप्टेम्बरको पहिलो साताभन्दा अघि हुँदैन तथा प्रतिनिधिहरूको नाम दर्ता मिति घोषणा भइसकेको छ र विना औपचारिक परिचय नाम पञ्जीकरण हुन नसक्ने भन्ने थाहा भएपछि उनलाई एउटा ठूलो धक्काको महशुस भयो । उनीसंग कुनै परिचय पत्र थिएन । उनी अपरिचित त थिए नै । कुनै मान्यता प्राप्त दलले उनलाई परिचय पत्र दिएको थिएन । उनको खल्ती खाली थियो । सम्मेलनको उद्घाटनसम्म उनको गुजारा चल्न गाह्रो थियो... उनलाई अत्यास लाग्न थाल्यो । उनले आफ्ना मद्रासका साथीहरूलाई तारद्वारा खवर गरे र एउटा मान्यता प्राप्त धार्मिक संस्थाका नाममा निवेदन पत्र पठाएर अनुदानका लागि याचना गरे । तर मान्य संस्थाहरूलाई स्वाधीनता सैह्य थिएन । संस्थाका प्रमुखले उत्तर दिए कि : " शैतानलाई ठंडा खाएर मर्न देऊ" । शैतान न मऱ्यो न त्यसबाट हतोत्साहित नै बन्यो । उनले आफूलाई भाग्यको शरणमा छाडिदिए । जे जति डलर साथमा थियो त्यो पनि यसै राख्नुको सट्टा बोस्टन जानका लागि खर्च गरिदिए । भाग्य पनि उसैको सहायता गर्छ जो आफ्नो सहायता गर्न जान्दछ । विवेकानन्द कहीं पनि अनाकर्षक बनी रहेनन् । अन्जान हुँदाहुँदै पनि उनले मानिसहरूलाई आकर्षित गरे । बोष्टनको रेल गाडीमा म्यासाचुसेट्सकी एक धनी

सहयात्री महिला उनको कुराकानीबाट प्रभावित भइन् र तिनले यिनलाई प्रश्न गरिन् । यीप्रति उनको चाख बढ्यो । उनले यिनलाई आफ्नों घरमा निमन्त्रणा गरिन् तथा ग्रीक सभ्यताका विद्वान, हार्वर्ड विश्वविद्यालयका प्रोफेसर जे. ऐच. राँइट्ससंग उनको परिचय गराइन् । राइट यस हिन्दु युवाको प्रतिभाबाट प्रभावित भएर यस युवकको सेवाका लागि तत्पर बने । उनको आग्रह रह्यो कि विवकानन्दले सर्वधर्म सम्मेलनमा हिन्दु धर्मका प्रतिनिधित्व गरून् भन्दै उनले यसै आशयको एक पत्र सम्मे लनको अध्यक्षलाई लेखे । उनले यो कंगाल तीर्थयात्रीका लागि शिकागोको टिकट काटिदिए । साथै सम्मेलनको समितिलाई विवेकानन्दका लागि बस्ने व्यवस्था गरिदिन पनि पत्राचार गरिदिए । सङ्क्षेपमा भन्नुपर्दा उनका सम्पूर्ण समस्या हल भएर गए ।

विवेकानन्द शिकागो फर्के । रेल पुग्न ढिलाइ भयो । समितिको ठेगाना भुलेर हैरान भएका उनलाई थाहा भएन कि कहाँ जाने ?

कालो रंगको मानिसलाई त्यहाँ कसले बाटो देखाउँथ्यो र ? । उनले स्टेशनको कुनामा एउटा खाली बाकस फ्याँकिएको अबस्थामा देखे र त्यसैमा उनी सुते । भोलिपल्ट उनी बाटो पत्ता लगाउने कामतर्फ लागे । सन्यासीका झैं घरघर भिक्षा माग्दै हिंडे तर उनी यस्तो शहरमा पुगेका थिए जहाँका मानिस पैसा कमाउन हजारौं तरिका जान्दथे तर एक्लो साधु उनी भने सन्त फान्सिस्को झैं भगवानको भरोसामा भट्कँदै थिए । कैयौं घरहरूबाट उनले अपमानित भएर फर्कनु पऱ्यो, कैयौं ठाउँहरूमा नोकरहरूले नै उनलाई हकारेर पठाए । कतिपयले त ढोकै थुनेर बसे । धेरैबेर भौं तारिएपछि हार खाएको थकित त्यो युवा सन्यासी एउटा गल्लीमा बस्न पुग्यो । घर को माथिबाट झ्याल बाहिर हेरिरहेको कसैले देखेर सोध्यो के यो सर्वधर्म सम्मेलनको प्रतिनिधि त हैन ? उनलाई भित्र बोलाइयो तथा भाग्यले उनलाई यस्तो अनुयायी दियो जो उनको अमेरिकी शिष्यहरूमध्ये सबैभन्दा निष्ठावान् सावित भयो । केही समय आराम गरेपछि उनलाई सम्मेलनमा लिएर गइयो । त्यहाँ उनलाई प्रतिनिधिका रूपमा सहर्ष स्वीकार गरियो र अरू पूर्वीय प्रतिनिधिहरूका साथ बसाइयो ।

यसरी उनको साहसिक यात्राको दुःखमय( अन्त्य हुनबाट बच्यो । उनलाई केही राहत मिल्यो तर आराम भने थिएन । दुर्भाग्यले आफ्नो पूरा खेल देखाइसके को थियो । अब कर्म तथा हठ संकल्पको समय आएको थियो । हिजोको त्यो अन्जान भिखारी जसलाई कालो रंग हुनाको कारण संसारका दर्जनौं जातिहरूको रगतबाट बनेको भीडले उनलाई देखेर घृणा महशुस गरिरहेको थियो आज ऊ नै प्रथम दृष्टिमा आफ्नो सर्वोच्चतम प्रतिभाको धाक जमाउन चाहन्थ्यो ।

# विश्वमञ्चमा स्वामी विवेकानन्द



शिकागो : सोमबार, ११ सेप्टेम्बर, १८९३ का दिन सम्मेलनको प्रथम सत्र आरम्भ भयो । बीचमा कार्डिनल गिवन्स आसीन थिए । उनको दायाँ बायाँ पूर्वीय प्रतिनिधि, ब्रह्म समाजका प्रमुख तथा विवेकानन्दका पुराना साथी प्रताप चन्द्र मजुमदार, ईश्वरवादीहरूका साथ बम्बैका नागरकर, श्रीलंकाका बौद्ध प्रतिनिधि धर्मपाल, जैनधर्मी गाँधी तथा ऐनी बेसेंन्टको सोफिकल सोसाइटीका चक्रवर्ती थिए । यी सबैको माझमा एउटा युवक बसेको थियो जो कसैको प्रतिनिधि थिएन तर एउटा दृष्टिबाट हेर्दा सबै को प्रतिनिधि थिए । कुनै सम्प्रदायका थिएनन् सम्पूर्ण भारतकै थिए जसले हजारौं दर्शकहरूलाई आकर्षित गरे । उनको मनोहर चेहरा, कुलीन चालढाल, तथा भव्य पहिरनले रहस्यमय जगतबाट अवतरित यस दिव्य व्यक्तिको प्रभावलाई अझै अधिक मात्रामा बढाइदिएको थियो र उनको आफ्नो निजीभावलाई भने लुकाइ दिएको थियो (यद्यपि उनले यसलाई लुकाएनन्) । उनले पहिलो पटक यस प्रकारको समाजलाई सम्बोधन गर्नु थियो । एक एक प्रतिनिधिको परिचय गराइयो । हरेक व्यक्तिले आफ्नो पालोमा छोटो वक्तव्य दिन्थे । विवेकानन्दको पालो भने घन्टौंपछि सबैको अन्तिममा आयो । तर जब उनले बोल्न थाले उनको वाणी वलिरहे को एउटा अग्नि ज्वालासरह प्रस्फुटन भइरहेको थियो । सुख्खा निवन्धहरूको पाठ सकिएपछिको यसले श्रोताहरूलाई व्यूँझाइदियो । "अमेरिकावासी भाइबहिनीहरु !" यसो मात्र के भन्न थालेका थिए सैयौं मानिसहरू आफ्नो स्थानबाट

उठेर करतल ध्वनी गर्न लागे । उनलाई आश्चर्य लाग्यो के यिनीहरूले वास्तवमा उनलाई अभिनन्दन त गर्दै छैनन् ! यिनै नै यस्ता पहिलो व्यक्ति थिए जसले सम्मेलनको औपचारिकता तोडेर जनतासंग उनीहरूकै भावमा कुरा गर्न थाले जसको प्रतीक्षा जनता गरिरहेका थिए । त्यसपछि फेरि मौनता छायो । उनले धर्महरूमा सबैभन्दा पुरानो वैदिक सन्यासी धर्मका तर्फबाट राष्ट्रहरुमा सबै भन्दा तरुण राष्ट्रको अभिनन्दन गरे । उनले हिन्दु धर्मलाई सम्पूर्ण धर्मको जननीका रुपमा प्रस्तुत गरे जसको शिक्षा थियो " एकले अर्कालाई बुझ र स्वीकार गर" । उनले पवित्र धर्मग्रन्थवाट दुईवटा उद्धरण अघि सारे :

"कुनै पनि रुपमा जो मेरो नजिक आउँछ उसलाई म प्राप्त हुनेछु । सबै मनुष्य विभिन्न मार्गबाट मेरो समीप आइपुग्नका लागि संघर्ष गरिरहेका छन्, सबैले अन्तमा मेरै साथ प्राप्त गर्नेछन्" ।

अरु सबै वक्ताहरूले आ-आफ्नै सम्प्रदायका मात्र चर्चा गरेका थिए । केवल यिनी एक्लैले उनीहरू सबैका ईश्वरको चर्चा गरिदिए तथा ती सबैलाई एउटै सार्वभौम सत्तामा आबद्ध गरिदिए । यो रामकृष्णको वाणी थियो जुन उनको महान् शिष्यको मुखबाट निस्केर समस्त वाधाहरूलाई फुकाइरहेको थियो । सर्वधर्म सम्मेलनले युवक वक्ताको जयजयकार गऱ्यो ।

भोलिपल्ट उहाँले दश-बाह्र पटक बोल्नुभयो । प्रत्येक पटक नयाँ नयाँ विचार एवं विश्वासका आधारमा उहाँले सार्वभौम धर्मको जाति, देश, कालरहित सिद्धान्तलाई निरुपण गर्दै अन्ध विश्वासी आदिवासीहरूले गर्ने गरेका जड वस्तुको पूजादेखि लिएर आधुनिक विज्ञानको सृजनात्मक उपलब्धिसम्मलाई यसले सम्पूर्ण मानवीय आत्मासंग जोड्ने बताए । साथै,उनले यिनको सुन्दर समन्वय गरे जसले गर्दा कुनै एक मात्र पनि आशा दीपलाई निभ्न नदिई सम्पूर्ण आशाहरूलाई आ-आफ्ना सहज स्वभाव अनुसार नै बढ्न पाउने अवसर प्रदान गरे ।

मनुष्यमा अन्तर्निहित दिव्यता तथा त्यसको विकसित हुन सक्ने अपार क्षमताको अतिरिक्त अन्य कुनै सिद्धान्त थिएन ।

यस प्रकारको धर्म भइदियो भने समस्त राष्ट्रले तपाइँको अनुशरण गर्ने छन् । सम्राट अशोकको परिषद् बौद्ध धर्मको परिषद् थियो । अकबरको 'दीनेइल( ाही' उदेश्यपूर्ण भएर पनि कुलीन गोष्ठी थियो । अमेरिकाका लागि यो सौभाग्य सुरक्षित थियो कि उसले समस्त विश्वलाई सबै धर्महरुमा ईश्वरको एकताको सन्देश देओस् ।

"हिन्दुहरूको ब्रह्म, जोरस्तरहरूको अहुरमजदा, बौद्धहरूको बुद्ध, ईसाईहरूको स्वर्गवासी पिताले यहाँहरू सबैलाई शक्ति दिऊन् । ईसाईलाई हिन्दु या बौद्ध तथा हिन्दु या बौद्धलाई ईसाई बन्नुपर्ने कुनै आवश्यकता छैन । प्रत्येकलाई अर्कोको भावना

## स्वामी विवेकानन्दले गर्नुभएको सम्बोधनको सूचि

| | |
|---|---|
| स्वागतको प्रत्युत्तर भाषण | ११ सेप्टेम्वर १८९३ |
| हामीमा मत भेद किन ? | १५ सेप्टेम्वर १८९३ |
| हिन्दुधर्मको सार । | १९ सेप्टेम्वर १८९३ |
| धर्म भारतको मुख्य आवश्यकता होइन | २० सेप्टेम्वर १८९३ |
| हिन्दु धर्मको पूर्णतामा नै बौद्ध धर्मको सिद्धि | २६ सेप्टेम्बर १८९३ |
| अन्तिम अधिवेशनमा दिइएको भाषण | २७ सेप्टेम्बर १८९३ |

आत्मसात गर्नुछ साथै आफ्नो विशिष्टतालाई अक्षुण्ण राख्दै आ-आफ्नो नियमानुसार विकास गर्नु छ । सर्वधर्म सम्मेलनले सिद्ध गरिदिएको छ कि धार्मिकता, पवित्रता तथा उदारता कुनै एक पंथको विशेषाधिकारको कुरा होइन र प्रत्येक व्यवस्थाले श्रेष्ठ चरित्रयुक्त महिला-पुरुष उत्पन्न गरेको छ । प्रतिरोधका बावजूद पनि अब प्रत्येक धर्म ध्वजामा कुँदिने छ । "सहयोग गर, लडाइँ नगर, विनाश होइन, आपसी मेल," 'फूट होइन मैत्री र शान्ति ' ।

यी ओजपूर्ण शब्दहरूको आश्चर्यजनक प्रभाव पर्न गयो । सम्मेलनका आधिकारिक प्रतिनिधिहरूलाई नछोईकन यी शब्दहरूद्वारा सर्वसाधारणलाई सम्वोधन गरिएको थियो तथा बाहिरी संसार उनीप्रति आकर्षित बनेको थियो । विवेकानन्दको प्रसिद्धी देशदेशावर मा फैलियो र त्यसले गर्दा भारतलाई कल्याण भयो । अमेरिकी अखबारहरूले उनलाई सर्वधर्म सम्मेलनका महानतम व्यक्तिका रुपमा स्वीकार गरे । "उनका कुरा सुनेपछि हामीलाई यो अनुभव हुन आएको छ भारत जस्तो ज्ञानी राष्ट्रका लागि मिशनरी पठाउनु कति मूर्खतापूर्ण कार्य हुन गएछ ।"

यो सहज रुपमा कल्पना गर्न सकिन्छ उक्त स्वीकारोक्ति ईसाईहरूलाई कर्णप्रिय हुनेछैन र विवेकानन्दको सफलताले उनीहरूमा कटु विद्वेष जगाइदियो जसको कारण उनी अत्यन्त घृणित लाञ्छना सहनबाट पनि पछि हटेनन् ।

# विश्वलाई विवेकानन्दले दिनुभएको मैत्री, शान्ति र सहिष्णुताको पाठ

## ११ सेप्टेम्बर, १८९३ ई. सं

## धर्म-महासभामा गरिएको स्वागतको प्रत्युत्तर भाषण

**अमेरिकावासी भाइबहिनीहरू !**

तपाईँहरूले जुन ममतामयी एवं सौहार्द्रपूर्ण शब्दमा हामीहरूको स्वागत गर्नुभयो त्यसप्रति आभार प्रकट गर्नका लागि उभिएका बखत मेरो हृदय अवर्णनीय हर्षले गद्‌गद् भइरहेको छ । म तपाइँहरुमा संसारमा प्रचलित सन्यासीहरूको सबै भन्दा पुरानो परम्पराका तर्फबाट धन्यवाद दिन्छु ; धर्महरूकी जननीका तर्फबाट धन्यवाद दिन्छु र साथै, सम्पूर्ण सम्प्रदाय एवं मतहरूका करौडौंकरोड हिन्दुहरूका तर्फबाट पनि धन्यवाद दिन्छु ।

म यस मञ्चबाट बोल्नु हुने ती कतिपय वक्ताहरूका प्रति पनि धन्यवाद ज्ञापन गर्दछु जसले पूर्वका प्रतिनिधिहरूका बारे बोल्दा बताउनु भएको छ कि सुदूर देशहरूबाट आउनुभएकाहरूले विभिन्न मुलुकहरूमा सहिष्णुताको भाव प्रचारप्रसार गर्ने गौरव आफूहरूमा भएको दावी गर्न सक्नु हुन्छ । म एक यस्तो धर्मको अनुयायी हुनुमा गौरवको अनुभव गर्दछु जसले संसारलाई सहिष्णुता तथा सार्वभौम स्वीकृति यी दुवै शिक्षा दिएको छ । हामी सम्पूर्ण धर्महरूप्रति सहिष्णुता मात्रमा विश्वास गर्दैनौं त्यो भन्दा अघि बढेर तिनीहरूको समस्त धर्मलाई सच्चा मानेर स्वीकार पनि गर्दछौं । मलाई एउटा यस्तो देशको व्यक्ति भएकोमा अभिमान छ जसले यस पृथ्वीका समस्त धर्म र देशका उत्पीडितहरू एवं शरणार्थीहरूलाई आश्रय दिएको छ । मलाई यहाँहरूका सामु यो भन्न पाउँदा गर्व हुन्छ हामीले आफ्ना छात्तीमा यहूदीहरूको विशुद्धतम शेष अंशलाई स्थान दिएका थियौं जसले दक्षिण भारतमा आएर त्यसै वर्ष शरण लिएका थिए जुन वर्ष यिनीहरूका पवित्र मन्दिर रोमन जातिको अत्याचारबाट

धूलोमा परिणत भएको थियो । यस्तो धर्मको अनुयायी हुनुमा म अनुभव गर्दछु जसले महान जरथुष्ट्र जातिको अवशिष्ट अंशलाई शरण दियो र जसको पालन उनीहरू अहिलेसम्म गरिरहेका छन् । बन्धुहरू म तपाइँहरूलाई एउटा स्तोत्रको केही हरफ सुनाउँछु जसको पुनरावृत्ति मैले आफ्नो बालककालदेखि गर्दै आएको छु र जसको आवृत्ति प्रतिदिन लाखौं मनुष्य गर्ने गर्दछन् :

**रुचीनां वैचित्र्यादृजुकुटिलनानापथजुषाम् ।**
**नृणामेको गम्यस्त्वमसि पयसामर्णव इव ।।** शिवमहिम्नस्तोत्रम् ॥७॥

-'जसरी विभिन्न नदीहरू भिन्न भिन्न स्रोतहरूबाट निस्केर समुद्रमा मिल्दछन्, सोही अनुसार हे प्रभो ! भिन्न भिन्न रुचीका कारण विभिन्न वाङ्गा टेढा अथवा सिधा मार्ग भएर जाने मानिसहरू पनि आखिरमा हजुरमा नै आएर मिल्दछन् । '

यो सभा, जुन अहिलेसम्म आयोजित सर्वश्रष्ठ पवित्र सम्मेलनहरूमध्ये एक हो, स्वतः नै गीतामा प्रतिपादित यस अद्भुत उपदेश यस जगत्प्रति लक्षित गर्दै भन्दछ :

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम् ।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः।।** २ गीता ॥४।११॥

-'म भएतिर आउने जो कोही किन नहोस् र .... कुनै पनि प्रकारले आएको किन नहोस् उसका लागि म प्राप्त हुन्छु । मानिस भिन्नभिन्न मार्गद्वारा प्रयत्न गर्दै अन्तमा म भएतिर नै आउँछ ।'

साम्प्रदायिकता, हठधर्मिता तथा त्यसको वंशगत डरलाग्दो धर्मान्धताले यो सुन्दर पृथ्वीमा धेरै समयसम्म राज्य गरिसकेको छ । उसले पृथ्वीलाई हिंसाद्वारा ढाक्दैछ, यसलाई मानवताको रगतद्वारा बारम्बार नुहाइरहेको छ, सभ्यताहरूलाई भत्काउँदै र समस्त देशहरूलाई निराशाको खाडलमा धकेल्दै आइरहेको छ । यदि त्यो यति धेरै भयावह एवं राक्षसी प्रवृतिको नहुँदो हो त मानव समाज आजको अवस्थाभन्दा कति बढी उन्नत भएर गएको हुन्थ्यो होला । तर अब त्यसको समय आइसकेको छ, र हृदयबाटै चाहन्छु, आज बिहान यस सभाको सम्मानमा जुन घन्ट ध्वनी भयो, त्यसैले यो समस्त धर्मान्धतालाई, तरबार या कलमद्वारा हुने सम्पूर्ण उत्पीडनहरू तथा एउटै लक्ष्यतिर अग्रसर हुने मानिसहरूको आपसी कटुताहरूको मृत्यु निनाद सिद्ध होस् ।

## १५ सेप्टेम्बर, १८९३ ई. सं

# हामीमा देखिएको मतभेदको कारण

म यहाँहरूलाई एउटा सानो कथा सुनाउँछु । भर्खरै जो प्रखर वाचाल महोदयले आफ्नो व्याख्यान समाप्त गर्नु भएको छ वहाँको त्यस भनाइमा यहाँहरूले सुन्नु भएको छ 'आउनुहोस्, हामी सबैले एकले अर्कोलाई खराब आक्षेप लगाउन बन्द गरिदिऊँ, वहाँलाई यस कुराप्रति ज्यादै खेद रहेको पाइयो कि मानिसहरूमा सधैं यति धेरै मतभेद किन देखिन्छ ?

तर मलाई लाग्छ जुन किस्सा म सुनाउन गइरहेको छु त्यसबाट तपाइँहरूलाई यो मतभेद रहनाको कारण स्पष्ट हुन जानेछ । एउटा कुवामा धेरै कालदेखि एउटा भ्यागुतो वस्तथ्यो । त्यो त्यहीं नै पैदा भएको र उसको पालन पोषण पनि त्यहीं नै भएको थियो । त्यति हुँदाहुँदै पनि त्यो भ्यागुतो सानै थियो । अँ, आजका क्रम विकासवादी (evolutionist) त्यसताका त्यहाँ थिएनन्, जसले हामीलाई यो कुरा बताउन सक्थे त्यो भ्यागुताका आँखाहरू थिए वा थिएनन्, तर कथामा पूर्णताका लागि यहाँ यो मान्नु आवश्यक छ कि त्यसका आँखाहरू थिए र ऊ प्रतिदिन यस्तो पुरुषार्थका साथ त्यहाँको पानीमा रहेका सबै कीराहरू हटाई पूर्ण स्वच्छ वनाई दिन्थ्यो, त्यति धेरै पुरुषार्थ गरेका भए हाम्रा आधुनिक कीटाणुवादीहरू (bacteriologists) लाई त्यसले यशस्वी बनाइदिन्थ्यो होला । यसरी विस्तारै विस्तारै त्यो भ्यागुतो त्यही कुवामा रहँदै बस्दै जाँदा मोटो र चिल्लो हुँदै गयो । त्यस्तैमा एक दिन एउटा अर्को भ्यागुतो, जो समुन्द्रमा बस्दथ्यो, त्यहाँ आयो र त्यस कुवामा पस्यो ।

"तिमी कहाँबाट आएका हौ ? "

"म समुद्रबाट आएको हूँ । "

समुद्र ! अँ, कति ठूलो छ त्यो समुद्र ? के त्यो पनि यो मेरो कुवाजत्तिकै ठूलो छ ?" अनि यतिभन्दै उसले कुवाको ओल्लो किनारबाट पल्लो किनारामा फाल हाल्यो ।



मुद्रको भ्यागुतो "हे मेरा मित्र ! त्यो समुद्रको तुलना सानो कुवासँग कसरी गर्न सकिन्छ ?

तब त्यो कुवामा बस्ने भ्यागुताले फेरि अर्को फाल हाल्यो र सोध्यो, "उसो भए के तिम्रो समुद्र त्यति ठूलो छ ?"

समुद्रको भ्यागुताले भन्यो, "तिमी कस्तो मूर्खको जस्तो कुरा गरिरहेका छौ ! के समुद्रको तुलना तिम्रो कुवासँग हुनसक्छ ?"

यति भएपछि कुवाको भ्यागुताले भन्यो, "भयो भयो जा ! मेरो कुवाभन्दा ठूलो अरु कुनै हुन नै सक्दैन । संसारमा योभन्दा ठूलो अरु केही छैन ! झूट्टा बोल्दो रहेछ ! ल, यसलाई बाहिर निकालिदेओ ।"

यही कठिनाइ सधैं रहँदै आएको छ ।

म हिन्दु हूँ । म आफ्नो सानो कुवामा बसेर यही सोच्दछु कि मेरो कुवा नै सम्पूर्ण संसार हो । ईसाई पनि आफ्नै क्षुद्र कुवामा बसेर यही सोच्दछ सारा संसार उसकै कुवामा छ । त्यस्तै मुसलमान पनि आफ्नो सानो कुवामा बसेर त्यसैलाई आफ्नो सारा ब्रह्माण्ड सम्झन्छ । म तपाईं अमेरिका बासीहरूलाई धन्य भन्दछु किनकि तपाईंहरू हामीहरूका यी स-साना संसारहरूको क्षुद्र सीमानाहरूलाई तोड्नको लागि महान् प्रयत्न गरिरहनुभएको छ, र म आशा राख्दछु भविष्यमा परमात्माले तपाईंहरूको यस प्रयासमा सहायता प्रदान गरेर यहाँहरूको मनोरथ पूर्ण गर्नेछन् ।

# हिन्दु धर्मबारे निबन्ध

## १९ सेप्टेम्वर, १८९३ ई. सं मा पाठ गरिएको

प्रागैतिहासिक युगदेखि चलिआएको केवल तीनवटा मात्र धर्म आज संसारमा विद्यमान छन् : हिन्दु धर्म, पारसी धर्म तथा यहूदी धर्म । यिनीहरूलाई हरेक प्रकार का चोटिला आघातहरू सहन गर्नु परेको छ, तैपनि जीवित रहेर यी सबै आ- आफ्नो आन्तरिक शक्तिको प्रमाण पेश गरिरहेका छन् । यति हुँदाहुँदै पनि यहाँ हामी यो देख्छौं कि यहूदी धर्मले ईसाई धर्मलाई आत्मसात् गर्न सकेको छैन, बरु आफ्नी सर्वविजयिनी दुहिता- -ईसाई धर्म द्वारा आफ्नो जन्मस्थानबाट निर्वासित गराइयो, र केवल मुठीभर पारसीहरू नै आफ्नो महान् धर्मको गाथा गाउनका लागि अहिले अवशेष रुपमा छन् ,--उता भारतमा

एकपछि अर्को गर्दै नमालुम कतिपय सम्प्रदायहरू उदय भए र तिनीहरूले वैदिक धर्मलाई जरैबाट हल्लाए जस्तो गरिदिए : तर भयङ्कर भूकम्पका समयमा समुन्द्र किनाराको जलझैं त्यो केही समयपछि हजार गुणा बलशाली भएर सर्वग्रासी छालको रुपमा फर्कनका लागि पछि हटेर गयो ; र जब यो सारा कोलाहल शान्त हुन गयो तब यी सम्पूर्ण धर्म - सम्प्रदायहरूलाई तिनीहरूको धर्म- माता-(हिन्दु धर्म) को विराट शरीरले खिँचेर लियो, आत्मासात् गरेर लियो र आफैंमा पचाइदियो ।

वेदान्त दर्शनको अति उच्च आध्यात्मिक उडानदेखि लिएर आधुनिक विज्ञानको नवीनतम आविष्कार जसको केवल प्रतिध्वनि मात्र प्रतीत हुन्छ, मूर्ति-पूजाको निम्न स्तरीय विचारहरू एवम् त्यससँग प्रासङ्गिक अनेकानेक पौराणिक दन्त्य कथाहरूसम्म, तथा बौद्धहरूको अज्ञेयवाद तथा जैनहरूको निरीस्वरवाद -- यिनीहरूमध्ये प्रत्येकका लागि हिन्दु धर्ममा स्थान छ ।

तब यो प्रश्न उठ्छ त्यस्तो कुन चाहिँ एक साझा विन्दु छ जहाँ यति धेरै विभिन्न दिशाहरूमा फैलने त्रिभुजहरू एउटै केन्द्रमा हुन आउँछन् ? त्यो कुनचाहीं एउटा सामान्य आधार हो जसमाथि यी तीव्र विरोधाभास आश्रित छन् ? यिनै प्रश्नहरूको उत्तर दिन अब म प्रयत्न गर्नेछु ।

हिन्दु जातिले आफ्नो धर्म श्रुती--वेदहरूबाट प्राप्त गरेको छ । उनीहरूको धारणा छ वेद अनादि र अनन्त छ । सम्भव छ, श्रोताहरूलाई यो कुरा हास्यास्पद लाग्ला के कुनै पुस्तक अनादि एवम् अनन्त हुनसक्छ ? तर वेदहरू भन्नाले कुनै पुस्तकको नाम हुँदै होइन । वेदको अर्थ हो विभिन्न कालमा विभिन्न व्यक्तिहरूद्वारा आविष्कार गरिएको आध्यात्मिक शक्तिहरूको सञ्चित कोष । जुन प्रकारले गुरुत्वाकर्षणको सिद्वान्तले मानिसहरूद्वारा पत्ता लगाइनु पूर्व नै पनि आफ्नो काम गर्दै आएको थियो र आज यदि मनुष्य जातिले त्यसलाई बिर्सोस् तैपनि त्यो नियमले आफ्नो काम गरिनैरहेको छ । ठीक यही कुरा आध्यात्मिक जगतलाई शासन गर्ने नियमहरूको सन्बन्धमा पनि लागू हुन्छ । एउटा आत्माको अर्को आत्मासँग र जीवात्माको आत्माहरूका परमपिताका साथ जुन नैतिक तथा आध्यात्मिक सम्बन्ध छ त्यो त्यसको आविष्कार हुनुपूर्व पनि थियो र हामीले यदि त्यसलाई बिर्सिहाल्यौं भने पनि त्यो जस्ताको तस्तो रहिरहने छ ।

यी नियमहरू या सत्यहरूको आविष्कार गर्नेहरू ऋषि भनिन्छन् र हामी तिनलाई पूर्णत्व प्राप्त मानेर सम्मान दिने गर्दछौं । श्रोताहरूलाई यो बताउँदा मलाई हर्ष लाग्दछ कि यी महानतम ऋषिहरू मध्ये कोही स्त्रीहरू पनि थिए ।

यहाँनिर यो भन्न सकिन्छ यी नियमहरू नियमका रुपमा अनन्त किन नहून् तथापि यिनीहरूको आदि भने अवश्य नै हुनुपर्दछ । वेद हामीलाई यो सिकाउँछ सृष्टिको न

आदि छ न अन्त । विज्ञानले हामीलाई सिद्ध गरेर देखाइदिएको छ सम्पूर्ण विश्वको सारा ऊर्जा-समष्टिको परिमाण सधैं एकै रुपको रहन्छ । त्यसो भए यदि यस्तो कुनै समय पनि थियो जब कुनै वस्तुको अस्तित्व नै पनि थिएन, त्यसवखत यो सम्पूर्ण व्यक्त ऊर्जा कहाँ थियो त ? कोही कोही मानिसहरू भन्दछन् ईश्वरमा नै त्यो सम्पूर्ण अव्यक्त रुपमा अन्तर्निहीत थियो । त्यसो भए त ईश्वर कहिले अव्यक्त र कहिले व्यक्त देखिन्छ यसबाट त त्यो बिकारवान पो हुनजान्छ । प्रत्येक विकारशील पदार्थ यौगिक हुन्छ र हरेक यौगिक पदार्थमा त्यो परिवर्तन अवश्यम्भावी हुन्छ जसलाई हामी विनाश भन्दछौं । यस प्रकारबाट त ईश्वरको मृत्यु हुनपुग्छ जुन कुरा अनर्गल हो । त्यसैले यस्तो समय कहिल्यै आएन जुन समयमा यो सृष्टि नभएको होस् । म एक दृष्टान्त दिन चाहन्छु : स्रष्टा र सृष्टि मानौं दुई रेखाहरू हुन् जसको न आदि छ न अन्त र ती समानान्तर रुपमा फैलन्छन् । ईश्वर नित्य क्रियाशील विधाता हो जसको शक्तिद्वारा प्रलय–सागरबाट हरहमेशा एकपछि अर्को ब्रह्माण्डको सृष्टि हुन्छ, त्यो केही समयसम्म गतिमान रहन्छ र त्यसपछि फेरि विनाश गरिदिइन्छ । सूर्याचन्द्रमसौ धाता यथापूर्वमकल्पयत्[३]–अर्थात् यी सूर्य र चन्द्रमालाई विधाताले अघिल्लो कल्पका सूर्य र चन्द्रमा समान निर्माण गरेका हुन–यस वाक्यको नित्य पाठ प्रत्येक हिन्दु बालक प्रतिदिन गर्ने गर्दछ ।

म यहाँ उभिएको छु र आफ्नो आँखा बन्द गरेर यदि आफ्नो अस्तित्व–'म', 'म' ,'म' लाई सम्झने कोशिस गरें भने ममा कुन भावको उदय हुन जान्छ ? यस भावको कि म शरीर हूँ । उसो भए के म भौतिक पदार्थहरूको मेलसिवाय अरु के ही होइन? वेदको घोषणा छ–'होइन–म शरीरमा रहने आत्मा हूँ, म शरीर होइन । शरीर मरेर जान्छ तर म मर्दिन । म यस शरीरमा विद्यमान छु र जब यस शरीर पतन भएर जानेछ त्यसबेला पनि म विद्यमान नै रहनेछु । मेरो एउटा अतीत पनि छ, आत्माको सृष्टि भएको होइन किनकि सृष्टिको अर्थ हुन्छ भिन्न भिन्न द्रव्यहरूको संघात र यी संघातहरूको भविष्यमा अवश्यभावी विघटन । त्यसैले यदि आत्माको सृष्टि भएको मान्ने हो भने त्यसको मृत्यु पनि हुन आवश्यक छ । कुनै मानिस जन्मदेखि नै सुखी हुन्छ, पूर्ण स्वास्थ्यको आनन्द भोग्दछ, उसलाई सुन्दर शरीर, उत्साहपूर्ण मन र सबै आवश्यक सामग्रीहरू प्राप्त भएका हुन्छन् । अरु कोही मानिस जन्मदेखि नै दुःखी हुन्छ, कसैको हात खुट्टा हुँदैन, त कोही मूर्ख हुन्छन् तथा जेनतेन आफ्नो दुःखमय जीवनमा दिन काटेको हुन्छ । यस्तो किन ? यदि यी सबैलाई एउटै न्यायी र दयालु ईश्वरले उत्पन्न गरेको भए फेरि किन उसले एउटालाई सुखी र अर्कोलाई दुःखी बनायो । ईश्वर यस्तो पक्षपाति किन हुन्छ ? फेरि यसो भनेर पनि



कुरा सुध्रन सक्दैन कि जो यस वर्तमान जीवनमा दुखी छ ऊ भावी जीवनमा पूर्ण सुखी रहन सक्छ। न्यायी तथा दयालु ईश्वरको शासनमा मानिस यस जीवनमा पनि दुःखी किन रहन्छ ?

अर्को कुरा यो छ, सृष्टिउत्पादक ईश्वरलाई मान्यता दिने सिद्धान्त यो विषमताको कुनै व्याख्या गर्दैन बरु त्यसले त केवल एक सर्वशक्तिमान पुरुषको निष्ठुर आदेश नै प्रकट गर्दछ । यसकारण यस जन्मभन्दा पहिले यस्तो कारण हुनु आवश्यक छ जसको फलस्वरुप मानिस यस जन्ममा सुखी वा दुःखी हुने गर्दछ । साथै, यसमा अर्को एउटा कारण पनि छ त्यो हो ऊ आफैंले गरेको पूर्व कर्म ।

के मानिसको शरीर र मनका सम्पूर्ण वृत्तिहरूको व्याख्या उत्तराधिकारबाट प्राप्त क्षमताद्वारा हुन सक्दैन ? यहाँ जड र चेतन (मन) सत्ताका दुई समानान्तर रेखाहरू छन् । यदि जड र जडको समस्त रुपान्तर नै जे जति यहाँ छन् त्यसको कारण सिद्ध हुन सक्छ भने फेरि आत्माको अस्तित्वलाई मान्नु पर्ने कुनै आवश्यकता रहन जाँदैन । तर यो सिद्ध गर्न सकिदैन कि चैतन्य (विचार) को विकास जडबाट भएको हो र यदि कुनै दार्शनिक अद्वैतवाद अनिवार्य छ भने आध्यात्मिक अद्वैतवाद निश्चय नै तर्कसंगत छ र भौतिक अद्वैतवाद पनि कुनै प्रकारले कम आवश्यक छैन तर यहाँ यी दुबैको आवश्यकता देखिदैन । हामी यो अस्वीकार गर्न सक्दैनौं कि शरीर कुनै वृत्तिहरूलाई आनुवंशिकताबाट प्राप्त गर्दछ तर यस्ता वृत्तिहरूको अर्थ केवल शारीरिक रुप आकृति मात्र हो जसको माध्यमबाट केवल एक विशेष मन एक विशेष प्रकारबाट काम गर्न सक्दछ । आत्माको केही यस्ता विशेष प्रवृत्तिहरू हुन्छन् जसको उत्पत्ति अतीतको कर्मबाट हुन्छ । एक विशेष प्रवृत्ति बोकेको जीवात्मा 'योग्यं योग्येन युज्यते' यस नियमअनुसार उही शरीरमा जन्म लिन्छ जुन ती प्रवृत्तिहरूलाई प्रकट गर्नका लागि सबैभन्दा उपयुक्त आधार हुन्छ । यो विज्ञानसंगत छ किनकि विज्ञान हरेक प्रवृत्तिको व्याख्या व्यवहारद्वारा गर्न चाहन्छ र व्यवहार ती प्रवृत्तिहरूद्वारा बन्दछ । त्यसैले नवजात जीवात्माको नैसर्गिक व्यवहारहरूको व्याख्याका लागि प्रवृत्तिहरूको आवश्यक हुन्छ, त्यो यस जीवनमा प्राप्त हुँदैन । त्यसकारण त्यो पूर्व जीवनहरूबाट नै आएको हुन्छ ।

एउटा अर्को दृष्टिकोण पनि छ । यी सबै कुराहरू यदि आफैंमा सिद्ध छन् भनेर मान्दा पनि त म आफ्नो पूर्व जन्मको कुनै कुराको स्मरण किन राख्न सक्दिन ? यसको सरल सामाधान छ । म अहिले अङ्ग्रेजी बोलिरहेको छु । यो मेरो मातृभाषा होइन । वास्तवमा यस बखत मेरो मातृभाषाको कुनै पनि शब्द मेरो चित्तमा आएको छैन ; तर तिनीहरूलाई ल्याउन सानो प्रयत्न गर्ने बित्तिकै ती मेरो मनमा आइहाल्छन् । यसबाट सिद्ध हुन्छ चेतना मनरुपी सागरको सतह मात्र हो र भित्र त्यसको गहिराइमा हाम्रो सम्पूर्ण अनुभव राशि सञ्चित छ । केवल प्रयत्न तथा उद्यम गर्नुहोस् ती सबै माथि उठेर आउने छन् र तपाईं आफ्नो पूर्व जन्महरूको पनि ज्ञान प्राप्त गर्न सक्नुहुनेछ ।

यो प्रत्यक्ष एवम् प्रतिपाद्य प्रमाण हो । सत्य - साधन नै कुनै परिकल्पनाको पूर्ण प्रमाण हुन्छ र ऋषि गण यहाँ सम्पूर्ण संसारलाई एउटा चुनौती दिइरहेका छन् । हामीले त्यस रहस्यलाई पत्ता लगाएका छौ जसबाट स्मृति - सागरको गम्भीरतम गहिराईसम्मको पनि मन्थन गर्न सकिन्छ -- त्यसको प्रयोग गर्नुहोस् तपाइँले आफ्नो पूर्व जन्महरूको सम्पूर्ण स्मृति प्राप्त गर्नुहुनेछ ।

त्यसैले हिन्दुहरूको यो विश्वास छ कि त्यही नै आत्मा हो । ' त्यसलाई हतियारले काट्न सक्दैन, अग्निले डढाउन सक्दैन, पानीले भिजाउन सक्दैन र हावाले सुकाउन सक्दैन ।'[४] हिन्दुहरूको यो धारणा छ कि आत्मा एउटा यस्तो वृत्त हो जसको परिधि कहीं छैन तर त्यसको केन्द्र शरीरमा अवस्थित छ र मृत्युको अर्थ हुन्छ यस केन्द्रको एउटा शरीरबाट अर्को शरीरमा स्थानान्तर भएर जानु । यो आत्मा जडको उपाधिहरूद्वारा बद्ध छैन । त्यो स्वरुपबाट नित्य शुद्ध, बुद्ध, मुक्त स्वभावको छ । तर कुनै कारणबाट त्यसले आफूलाई जडद्वारा बाधिएको पाउँछ र आफूलाई पनि जड नै सम्भन्छ ।

अब अर्को प्रश्न यो छ यो विशुद्ध, पूर्ण र मुक्त आत्मा यस प्रकार जडको दासत्व किन स्वीकार गर्दछ ? स्वयं पूर्ण भएर पनि यस आत्मालाई अपूर्ण रहेको भ्रम कसरी हुनजान्छ ? हामीहरूलाई यो बताइन्छ हिन्दुहरू यस प्रश्नबाट हड्बढाउँछन् र भनिदिन्छन् यस्तो प्रश्न हुन नै सक्दैन । कोहीकोही विचारकहरू पूर्णप्रायः सत्ताहरूको कल्पना गर्छन् र यस रिक्ततालाई भर्नका लागि ठूलाठूला वैज्ञानिक नामहरूको प्रयोग गर्दछन् । तर नामले मात्र व्याख्या हुन सक्दैन । प्रश्न जहाँको तहीँ नै रहिर हन्छ ; शुद्ध, निरपेक्ष ब्रह्म आफ्नो स्वभावलाई सूक्ष्मातिसूक्ष्म कण मात्रमा पनि कसरी परिवर्तन गर्न सक्छ ? तर हिन्दु इमान्दार हुन्छ । ऊ मिथ्या तर्कको सहारा लिन चाहँदैन । आफ्नो पुरुषोचित रुपमा यस प्रश्नको सामना गर्ने साहस ऊ राख्दछ र उत्तर दिन्छ " मलाई थाहा छैन । मलाई थाहा छैन कि पूर्ण आत्मा आफूलाई अपूर्ण कसरी ठान्दछ, जडः पदार्थहरूको संयोगबाट आफूलाई जड(नियमाधिन कसरी मान्न थाल्यो । " तर यी सबैको बावजुद पनि तथ्य जो हो उही नै रहने छ । सबैको चेतनाको एउटा तथ्य यो हो प्रत्येक व्यक्ति आफूलाई शरीर ठान्दछ । हिन्दु यस कुराको व्याख्या गर्ने प्रयत्न गर्दैन कि मनुष्य आफूलाई शरीर किन सम्भिन्छ । यो ईश्वरको इच्छा हो । यस उत्तरले कुनै समाधान दिँदैन । यो उत्तर हिन्दुको 'मलाई थाहा छैन 'को सिवाय अरु केही होइन ।

त्यसै कारण मानिसको आत्मा अनादि र अमर छ, पूर्ण एवं अनन्त छ, र मृत्युको अर्थ हुन्छ --एउटा शरीरबाट अर्को शरीरमा केवल केन्द्र- परिवर्तन । वर्तमान अवस्था हाम्रा पूर्व कर्महरूद्वारा निश्चित हुन्छ र भविष्य( वर्तमान कर्महरूद्वारा । आत्मा जन्म



र मृत्युको चक्रमा लगातार घुम्दै कहिले माथि जान्छ कहिले फर्केर आउँछ ।

तर यहाँ एउटा अर्को प्रश्न उठ्छ के मानिस उग्र तुफानमा ग्रस्त त्यो सानो डुङ्गा हो, जो एकक्षण कुनै वेगवान तरङ्गको फिँजको माथि चढ्दछ र अर्को क्षण भयानक खाडलमा तल धकेलिएर जान्छ, आफ्नो शुभ र अशुभ कर्महरूको दयामा केवल यताउता भड्कदै फिर्दै रहन्छ, त्यो कार्यकारणको निरन्तर प्रवाही, निर्मम, भीषण तथा गर्जनशील धारामा परेको अशक्त, असहाय, भत्केको जहाज हो, के ऊ त्यस कारणको चक्रको तल परेको एउटा क्षुद्र शलभ हो, जो विधवाको आँशुहरु तथा अनाथ बालकको चिच्याहट्को अलिकति पनि चिन्ता नगरेर आफ्नो बाटोमा आउने सम्पूर्ण वस्तुहरूलाई कुल्चिदिन्छ ?

यसप्रकारको विचारद्वारा अन्तस्करण डगमगाएर आउँछ तर यही नै प्रकृतिको नियम हो । त्यसो भए के कुनै आशा गर्ने ठाउँ नै छैन ? के यसबाट बच्ने कुनै बाटो नै छैन ?–यही दयापूर्ण पुकार निराशाले विह्वल हृदयको भित्रबाट माथि उठ्यो र त्यो दयापूर्णको सिंहासनसम्म पुग्यो । त्यहाँबाट आशा तथा सान्त्वनाभरि वाणी निस्कियो र त्यसले एउटा वैदिक ऋषिलाई अन्तस्फुरण प्रधान गर्‍यो र त्यसले संसारको अगाडि खडा भएर सुरिलो स्वरमा यस आनन्द सन्देशको घोषणा गर्‍यो : ' हे अमृतका पुत्रहरू ! सुन, हे दिव्यधामवासी देवगण !! तिमी पनि सुन, मैले त्यो अनादि पुराण पुरुषलाई प्राप्त गरेको छु, जो समस्त अज्ञान अन्धकार र मायाभन्दा माथि छ । केवल त्यस पुरुषलाई जानेर मात्र तिमी मृत्युको चक्रबाट छुट्न सक्दछौ । अर्को कुनै बाटो छैन ।'[५] अमृतका पुत्रहरू–कस्तो मधुर एवम् आशाजनक सम्बोधन

छ यो । बन्धुहरू हो ! यही मधुर नाम : अमृतको अधिकारीद्वारा तपाइँलाई संम्बोधन गर्न, तपाइँ यसको आज्ञा मलाई दिनुहोस्, निश्चय नै हिन्दु आफूलाइ पापी भनाउन अस्वीकार गर्दछ । ऊ आफू ईश्वरको सन्तान हो, अमर आनन्दको भागिदार हो, पवित्र र पूर्ण आत्मा हो । उही नै यस मर्त्यभूमिको देवता हो । ऊ कसरी पापी हुन सक्छ ? मानिसलाई पापी भन्नु नै पाप हो, त्यो मानव स्वरुपमाथिको घोर लाञ्छना हो । तपाइँ जाग्नुहोस् ! हे सिंह ! आउनुहोस्, तपाइँ भेडा हो भन्ने यस मिथ्या भ्रमलाई झड्कारेर टाढा फ्याँकिदिनुहोस् । तपाइँ नै आत्माअमर, आत्मा मुक्त, आनन्दमय र नित्य ! तपाइँ जड हुनुहुन्न, तपाइँ शरीर होइन । जड त तपाइँको दास हो न कि तपाइँ जडको दास ।

यस कारण वेद यस्तो घोषणा गर्दैन: यो सृष्टिव्यापार कतिपय निर्मम विधानहरूको संघात हो न यो भन्छ कि त्यो कार्यकारणको अनन्त सीमा नै तर ऊ यो घोषणा गर्दछ सबै प्राकृतिक नियमहरूको फेदमा जड-तत्व र शक्तिको प्रत्येक अणुपरमाणुमा ओतप्रोत उही नै एक बिराजमान छ, 'जसको आदेशले वायु चल्दछ, अग्नि बल्दछ, वादल वर्षाउँदछ र मृत्यु पृथ्वीमा नाच्दछ ।'[६] र, त्यो पुरुषको स्वरुप कस्तो छ त ?

त्यो सर्वत्र छ, शुद्ध, निराकार, सर्वशक्तिमान छ, सबैमाथि उसको पूर्ण दया छ । 'तिमी नै हाम्रो माता पिता हौ, तिमी नै प्रेमी सखा हौ, तिमी नै सबै शक्तिका मूल हौ, हामीलाई शक्ति देऊ । तिमी नै यो सम्पूर्ण भुवनहरूका भार वहनगने वाला हौ ; तिमीले मलाई यस जीवनको क्षुद्र भारलाई वहन गर्नमा सहायता देऊ ।' वैदिक ऋषिहरूले यही गाएका छन् । हामीले त्यस (ईश्वर) को पूजा कसरी गर्ने ? प्रेमद्वारा । 'लौकिक र पारलौकिक समस्त प्रिय वस्तुहरूभन्दा पनि अधिक प्रिय जानेर त्यो परम प्रेमास्पदको पूजा गर्नु पर्दछ ।

वेद हामीलाई प्रेमका सम्वन्धमा यस प्रकारको शिक्षा दिन्छ । अब विचार गरौं श्री कृष्ण, जसलाई हिन्दुहरू पृथ्वीमा ईश्वरको पूर्णावतार मान्दछन्, यस प्रेमको सिद्धान्तको पूर्ण विकास कसरी गरिएको छ र हामीलाई के उपदेश दिएका छन् ।

उनले भनेका छन्-मनुष्यले यस संसारमा पद्मपत्रका झैं रहनुपर्दछ । पद्मपत्र जसरी पानीमा रहेर पनि त्यसबाट भिजेको हुँदैन सोही अनुसार मनुष्यले पनि संसारमा रहनु पर्दछ..... उसको हृदय ईश्वरमा लागिरहोस् र उसको हात कर्ममा लागिरहोस् ।

यस लोक या परलोकमा पुरस्कार पाउने आशाले ईश्वरलाई प्रेम गर्नु नराम्रो होइन तर प्रेमकै लागि ईश्वरलाई प्रेम गर्नु सबैभन्दा राम्रो हो र उसको नजिक यही प्रार्थना गर्नु उचित छ, 'हे भगवान', मलाई न त सम्पति चाहिन्छ, न सन्तति, न विद्या । यदि तिम्रो इच्छा छ भने हजारपटक जन्म मृत्युको चक्रमा पर्न तयार

छ, तर हे प्रभो ! केवल शक्तिमात्र देउ कि म फलको आशा छाडेर तिम्रो भक्ति गर्न पाउँ, केवल प्रेमका लागि नै तिमी उपर मेरो निःस्वार्थ प्रेम बनोस् ।'[७] कृष्णको एउटा शिष्य त्यसबेला भारतका सम्राट् थिए । उनका शत्रुहरूले उनलाई राज सिंहासनबाट च्युत गरिदिएका थिए र उनलाई आफ्नी साम्राज्ञीका साथ हिमालयको जंगलमा आश्रय लिनुपरेको थियो । त्यहाँ एकदिन साम्राज्ञीले उनीसँग प्रश्न गरिन्: "मनुष्यहरूमा सर्वोपरि पुण्यवान् भएर पनि हजुरलाई यति धेरै दुःख किन सहनु परे को हो ? " युधिष्ठरले उत्तर दिए " महारानी, हेर, यो हिमाल कस्तो भव्य र सुन्दर छ । म यसलाई प्रेम गर्दछु । यसले मलाई केही दिँदैन, तर मेरो स्वभाव नै यस्तो छ कि म भव्य एवं सुन्दर वस्तुसँग प्रेम गर्छु र यही कारण म ऊ सँग प्रेम गर्दछु । त्यसै प्रकार म ईश्वरसँग प्रेम गर्दछु ।

त्यो अखिल सौन्दर्य समस्त सुन्दरताको मूल हो । उही एउटा यस्तो पात्र छ, जससँग प्रेम गर्नुपर्दछ । उसलाई प्रेम गर्नु मेरो स्वभाव हो र त्यसैकारण म त्यससँग प्रेम गर्दछु । म कुनै कुराको लागि त्यससँग प्रार्थना गर्दिन, कुनै कुरा माग्दिन । उसलाई जहाँ मन लाग्छ मलाई त्यहीँ राखोस् । म त सबै अवस्थामा केवल प्रेमका लागि नै उससँग प्रेम गर्न चाहन्छु, म प्रेममा सौदा (व्यापार) गर्न सक्दिन ।[८]

वेद भन्दछ आत्मा दिव्यस्वरुप छ । त्यो केवल पञ्चभूतहरूको बन्धनहरूमा बाँधिन गयो र ती बन्धनहरू चुँडेपछि ऊ आफ्नो पूर्णत्वलाई प्राप्त गर्नेछ । यसै अवस्थाको नाम मुक्ति हो जसको अर्थ हुन्छ स्वाधीनता : अपूर्णताका बन्धनहरूबाट छुटकारा, जन्म मृत्युबाट छुटकारा ।

साथै, यो बन्धन केवल ईश्वरको दयाबाट नै छुट्न सक्छ र त्यो दया पवित्र मानिसहरूलाई नै प्राप्त हुन्छ । त्यसो भएको हुँदा पवित्रता नै त्यसको अनुग्रह प्राप्तिको उपाय हो । उसको दयाले कसरी काम गर्दछ ? उसले पवित्र हृदयमा आफूलाई प्रकाशित गर्दछ । पवित्र तथा निर्मल मानिसले यसै जीवनमा ईश्वर दर्शन प्राप्त गरेर कृतार्थ बन्दछ । त्यसपछि उसको समस्त कुटिलताहरू नष्ट भएर जान्छन्, सम्पूर्ण सन्देहहरू हटेर जान्छन् ।[९]

त्यसपछि त्यो कार्यकारणरुपी भयावह नियमको हातको खेलौना रहन सक्दैन । यही नै हिन्दुधर्मको मूलभूत सिद्धान्त हो र यही नै त्यसको अत्यन्त मार्मिक भाव पनि । हिन्दु शब्द तथा सिद्धान्तहरूको जालमा बाँच्न चाहँदैन । यदि यस्ता साधारण इन्द्रियगत विषयहरूभन्दा पर अरु पनि कुनै अस्तित्वहरू छन् भने त्यसको पनि प्रत्यक्ष ज्ञान गर्न ऊ चाहन्छ । यदि त्यसमा कुनै आत्मा छ, जड वस्तु पनि होइन र यदि कुनै दयामय सर्वव्यापी विश्वात्मा छ भने त्यसलाई उसले साक्षात्कार गर्नेछ ।

त्यसले उसलाई अवश्य देख्नेछ अनि मात्र त्यसैबाट उसका समस्त शङ्काहरू हटेर जानेछन् । अतः हिन्दु ऋषि आत्माका विषयमा ईश्वरका विषयमा यही नै सर्वोत्तम प्रमाण पेश गर्दछ : 'मैले आत्माको दर्शन गरें : मैले ईश्वरको दर्शन गरेको छु ।' र, यही नै पूर्णत्व प्राप्तिको एक मात्र सर्त हो । हिन्दु धर्म विभिन्न मतमतान्तरहरू या सिद्धान्तहरूमाथि विश्वास गर्नका लागि सङ्घर्ष र प्रयत्नमा मात्र सीमित छैन बरु ऊ साक्षात्कारमा विश्वास गर्छ केवल विश्वास गर्नु मात्र पनि पर्याप्त ठान्दैन, अनुभूत भएको र दृष्टवान् हुनुपर्छ भन्ने ठान्दछ । यसप्रकार हिन्दुहरूको सम्पूर्ण साधना प्रणालीको लक्ष हुन्छ निरन्तर अभ्यासद्वारा पूर्ण बन्नु, दिव्यता प्राप्त गर्नु, ईश्वर लाई प्राप्त गर्नु र त्यसको दर्शन गर्नु तथा ईश्वरलाई यसै प्रकारबाट प्राप्त गर्नु, त्यसको दर्शन गर्नु, त्यस स्वर्गस्थ पिताका समान पूर्ण भएर जानु-हिन्दुहरूको धर्म हो ।

अनि जब मनुष्य पूर्णत्वलाई प्राप्त गर्दछ, त्यसपछि उसको अवस्था के हुन्छ ? तब ऊ असीम प्रेमानन्दको जीवन व्यतीत गर्दछ । जुन एकमात्र वस्तुमा मनुष्यले सुख पाउनुपर्ने हो, त्यसलाई अर्थात् ईश्वरलाई पाएर ऊ परम तथा असीम आनन्दको उपभोग गर्दछ र ईश्वरका साथ पनि परमानन्दको आस्वादन गर्दछ ।

यहाँसम्म सबै हिन्दुहरू एकमत छन् । भारतका विभिन्न सम्प्रदायहरूको यही सामान्य धर्म हो । तर पूर्ण भनेको निरपेक्ष हुन्छ र त्यस्तो निरपेक्षता दुई या तीन हुन सक्दैन । त्यसमा कुनै गुण हुन र त्यो व्यक्ति हुन सक्दैन । त्यसकारण जब

ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ

आत्मा पूर्ण एवं निरपेक्ष हुन जान्छ, तब त्यो ब्रह्मका साथ एकाकार हुन पुग्दछ र ऊ ईश्वरलाई केवल आफ्नै स्वरुपको पूर्णता, सत्यता र सत्ताका रुपमा--परम सत्, परम चित्, परम आनन्दको रुपमा--प्रत्यक्ष गर्दछ। यही साक्षात्कारको विषयमा हामी बारम्बार पढ्ने गर्दछौं कि यसमा मानिस आफ्नो व्यक्तित्वलाई हराएर जडता प्राप्त गर्दछ अर्थात् पत्थरसमान बन्न जान्छ ।

'जसलाई कहिल्यै चोट लागेको छैन उसैले नै चोटको दागलाई ठट्टाको दृष्टिबाट हेर्दछ ।' म यहाँहरुलाई भन्छु, यस्तो कुनै चीज नै छैन । यदि यो एउटा क्षुद्र शरीरको ज्ञान हुँदा त यति आनन्द हुन्छ भने दुईओटा शरीरहरुको चेतनाको आनन्द त्यो भन्दा बढी हुनुपर्दछ र सोहीअनुसार क्रमशः अनेक शरीरहरुको चेतनाका साथसाथै आनन्दको मात्रा पनि आधिकाधिक बढेको हुनपर्दछ र विश्व-चेतनाको ज्ञान भएपछि आनन्दको परम अवस्था प्राप्त हुन जानेछ ।

अतः त्यो असीम विश्वव्यक्तित्वको प्राप्तिका लागि यो सङ्कुचित दुःखमय क्षुद्र व्यक्तित्वको अन्त्य हुन आवश्यक छ। जब म प्राण रुपमा एक हुन जानेछु तब मात्र मृत्युको हातबाट मेरो छुट्कारा हुन सक्तछ। जब म आनन्द स्वरुप हुनेछु तब मात्र दुःखको अन्त हुन सक्नेछ। जब म ज्ञान स्वरुप हुन जानेछु तब मात्र सबै अज्ञानको अन्त हुन सक्दछ र यो नै अनिवार्य वैज्ञानिक निष्कर्ष पनि हो। विज्ञानले मेरा सामु यो सिद्ध गरिदिएको छ हामीहरूको यो दृष्टवान भौतिक व्यक्तित्व भ्रम मात्र हो। वास्तवमा मेरो यो शरीर एउटा अविच्छिन्न जड सागर मा एउटा क्षुद्र, सधैं परिवर्तन भइरहने पिण्ड हो र मेरो अर्को पक्ष--आत्माका सम्बन्धमा अद्वैत नै अनिवार्य निष्कर्ष हो ।

विज्ञान भनेको एकत्वको खोज बाहेक अरु केही होइन। जबजब कुनै विज्ञान पूर्ण एकतासम्म पुग्न जानेछ तबतब उसको प्रगति रोकिन जानेछ किनकि त्यतिबेला त्यसले आफ्नो लक्ष्यलाई हासिल गरेको हुनेछ। उदाहरणका लागि रसायन शास्त्र यदि एकपटक त्यसले एउटा मूल तत्वलाई पत्ता लगाउँछ जसबाट अरु सबै द्रव्य बन्न सक्छन् भने त्यसपछि त्यो अरु अगाडि बढेर जानसक्दैन। भौतिक विज्ञानले जब त्यो एउटा मूल शक्तिको पत्ता लगाउने छ अरु शक्तिहरू जसका अभिव्यक्तिहरू हुन् र त्यतिबेला त्यो पनि त्यहीँ नै रोकिन जानेछ। त्यसैप्रकारले धर्म शास्त्रले पनि त्यसबखत पूर्णतालाई प्राप्त गर्नेछ जब ऊ त्यसको खोजी गर्नेछ जो यस मृत्यु लोकमा एकमात्र जीवन हो र जो यस परिवर्तनशील संसारको शाश्वत आधार हो, जो एकमात्र परमात्मा हो अरु सबै आत्माहरू जसको प्रतीयमान अभिव्यक्तिहरू हुन्। यसप्रकार अनेकता र द्वैतमा रहँदारहँदै पनि यस परम अद्वैतको प्राप्ति हुन जान्छ। धर्म यसदेखि अगाडि जान सक्दै न। यही नै समस्त विज्ञानहरूको चरम लक्ष पनि हो। समग्र विज्ञान आखीर अनिवार्य

रुपमा यही निष्कर्षमा नै पुग्नेछ । आज विज्ञान शब्द अभिव्यक्ति हो, सृष्टि होइन र हिन्दुलाई यो देखेर बढी प्रसन्नता हुन्छ किनकि यसलाई उसले आफ्नो अन्तस्करणमा युगौं युगदेखि महत्व दिँदै आएको छ । अहिले त्यसको शिक्षा अधिक शसक्त भाषामा विज्ञानका नवीनतम निष्कर्षहरूका अतिरिक्त प्रकाशको माध्यमद्वारा दिईंदै आएको छ ।

अब हामी दर्शनको अन्तिम उद्देश्यबाट ओर्लेर ज्ञानरहित मानिसहरूको धर्मतर्फ आउछौं । यो कुरा म प्रारम्भमा नै यहाँहरूलाई बताइदिन चाहन्छु कि भारतवर्षमा अनेकेश्वरवाद छैन । प्रत्येक मन्दिरमा यदि कसैले उभिएर सुन्यो भने उसले त्यहाँ यही पाउने छ कि भक्तगण सर्वव्यापी आदि ईश्वरको सम्पूर्ण गुणहरूको आरोप तिनै मूर्तिहरूमा गर्दछन् । यो अनेकेश्वरवाद होइन न एकदेववादबाट नै यस स्थितिको व्याख्या हुन सक्दछ । 'गुलाबलाई चाहे अर्को कुनै नाम किन नदिउँ तर त्यसले सुगन्ध त त्यस्तै मधुर नै दिइरहेको हुन्छ' । नाम नै त्यसको व्याख्या हुन सक्दैन ।

बालककालको एउटा घटना मलाई यहाँ याद आउँछ । एक ईसाई पादरी केही मानिसहरूको भीड जम्मा गरेर धर्म उपदेश गरिरहेको थियो । धेरै प्रकारका रमाइला कुराहरूका साथसाथै त्यो पादरीले यो पनि भन्यो कि "यदि मैले तपाइँको देव मूर्तिलाई लठ्ठीले हिर्काएँ भने उसले मेरो के बिगार गर्न सक्छ ?" एउटा श्रो ताले तत्कालै जवाफ दियो," यदि मैले तपाइँको ईश्वरलाई गाली गरेँ भने त्यसले मेरो के बिगार गर्न सक्छ ।" त्यसैबीच एउटा हिन्दुले उठेर भन्यो, " तिमी पनि मर्छौ र त्यसबेला ठीक त्यही तरिकाले हाम्रो देवमूर्तिले तिमीलाई दण्ड दिनेछ ।"

वृक्षलाई त्यसको फलबाट चिनिन्छ । जब मूर्तिपूजक भनिने मानिसहरूमा म यस्तो मानिसलाई भेट्छु जसको नैतिकता, आध्यात्मिकता तथा प्रेम आफ्नो स्वभाव अनुसार देखिँदै न, तब म रोकिन पुग्छु आफैंलाई सोध्छु–के पापबाट पनि पवित्रताको उत्पत्ति हुन सक्छ ?

अन्धविश्वास मानिसको ठूलो शत्रु हो तर धर्मान्धता त त्यसभन्दा पनि बढी हो । ईसाई गिर्जाघर किन जान्छ ? कुस किन पवित्र छ ? प्रार्थना गर्दा किन मुख आकाशतर्फ फर्काइन्छ ? क्याथोलिक ईसाईहरूको गिरजाघरहरूमा किन यतिका मूर्तिहरू राख्ने गरिन्छ ? र, प्रोटेस्टेन्ट ईसाईहरूको मनमा प्रार्थनाको समय किन यति धेरै मूर्तिहरू राख्ने गरिन्छ ? मेरा बन्धुहरू हो ! मनमा कुनै मूर्ति नआईकन के ही सोच्न सक्नु त्यति असम्भव छ जति श्वास नलिईकन जीवित रहन । साहचर्यको नियमानुसार भौतिक मूर्तिबाट मानसिक भाव विशेषको उद्दीपन हुन जान्छ, अथवा मनमा भावविशेषको उद्दीपन हुनाले तदनुरुप मूर्ति विशेषको पनि आविर्भाव हुन्छ । त्यसैले त हिन्दुले आराधनाको समय वाह्य प्रतीकको उपयोग गर्छ । ऊ तपाईंलाई बताउने छ यो वाह्य प्रतीक उसको मनलाई आफ्नो ध्यानको विषय परमेश्वर

मा एकाग्रता स्थिर बनाउनमा सहायता दिन्छ । उसलाई पनि यो कुराको त्यति नै राम्ररी ज्ञान छ जति तपाईंलाई थाहा छ कि त्यो मूर्ति न त ईश्वर हो न सर्वव्यापी नै । र, संसारका मानिस 'सर्वव्यापीकत्व'को अर्थ के लगाउँछन् भनेर सोध्नु हुन्छ भने त्यो त केवल एक शब्द या प्रतीक मात्र हो । के परमेश्वरको पनि कुनै क्षेत्रफल हुन्छ ? यदि हुँदैन भने त जतिबेला हामी सर्वव्यापी शब्दको उच्चारण गर्दछौं त्यस वखत विस्तृत आकाश या देशको कल्पना गर्नुसिवाय हामी अरु के नै गर्न सक्छौं र ?

आफ्नो मानसिक बनावटको नियमाअनुसार हामीलाई कुनै प्रकारले आफ्नो अनन्तताको भावनालाई नीलो आकाश या अपार समुन्द्रको कल्पनासंग सम्बद्ध गर्नु पर्दछ, सोही अनुसार हामी पवित्रको भावनालाई आफ्नो स्वभाव अनुसार गिरजाघर, मस्जिद या कुससंग जोड्न पुग्छौं । हिन्दुहरू पवित्रता, नित्यत्व, सर्वव्यापित्व आदि आदि भावहरूको सम्बन्ध विभिन्न मूर्ति तथा रुपसँगै जोड्दछन् । फरक यो छ कि जहाँ अन्य मानिसहरू आफ्नो सारा जीवन कुनै गिरजाघरमा रहेको मूर्तिको भक्तिमा नै बिताइदिन्छन् र त्यसभन्दा अगाडि बढ्दैनन् किनकि उनीहरूका लागि धर्मको अर्थ यही हुन्छ, कुनै विशिष्ठ सिद्धान्तहरूलाई आफ्नो बुद्धिअनुसार नाउँ अपनाउनु र आफ्ना मानव बन्धुहरूको भलाई गर्दैरहनु--जबकि त्यस्तोमा एउटा हिन्दुको सम्पूर्ण धार्मिक भावना प्रत्यक्ष अनुभूति या आत्मा साक्षात्कारमा केन्द्रीभूत हुन्छ । मनुष्यलाई ईश्वर को साक्षात्कार गरेर दिव्य बन्नुछ । मूर्तिहरू, मन्दिर, गिरजाघर या ग्रन्थ त धार्मिक जीवनको बाल्याबस्थामा केवल आधार या सहायक मात्र हुन् तैपनि तिनीहरूलाई उत्तरोत्तर उन्नति गर्दै रहनु पर्दछ ।

मानिसले कहीं पनि रोकिनु हुँदैन । शास्त्रको भनाई छ 'बाहिरी पूजा या मूर्ति पूजा सबैभन्दा तल्लो स्तरको अवस्था हो ।'

अगाडि बढ्ने प्रयास भइरहेको बेला मानसिक प्रार्थना साधनाको दोस्रो अवस्था हो र सबैभन्दा उच्च अवस्था त त्यो हो जब परमेश्वर साक्षात्कार हुनजान्छ ।[१०] हेर्नुहोस्, उही अनुरागी साधक जो पहिले मूर्तिको अगाडि झुकेको अवस्थामा रहन्थ्यो अब के भन्दै छ–'सूर्य त्यस परमात्मालाई प्रकाशित गर्न सक्दैन न त चन्द्रमा या तारा गणले नै । त्यो विद्युतप्रभा पनि परमेश्वरलाई उद्भाषित गर्न सक्दैन तब यो मामूली अग्निको त कुरा नै के ! यी सबै उही परमेश्वरका कारण प्रकाशित हुन जान्छन् ।[११] तर ऊ कसैको मूर्तिलाई गाली गर्दैन र न त्यसको पूजालाई पाप मान्दछ । ऊ त त्यसलाई जीवनको एक आवश्यक अवस्था भन्ने बुझेर त्यसलाई स्वीकार गर्दछ । 'बालक नै मानिसको पिता हो । उसो भए के कुनै बृद्ध पुरुषको युवा अवस्थालाई पाप या खराब भन्नु उचित होला ?

यदि कुनै मानिस आफ्नो दीव्य स्वरुपलाई मूर्तिको सहायताबाट अनुभव गर्न सक्दछ भने के त्यसलाई पाप भन्न ठिक पर्ला ? अनि जब ऊ त्यस अबस्थाभन्दा अगाडि बढिसकेको छ तब पनि उसका लागि मूर्ति पूजालाई भ्रमात्मक भन्नु उचित हुने छैन । हिन्दुको दृष्टिमा मानिस भ्रमका कारण सत्यतर्फ गइरहेको छैन । ऊ त सत्यद्वारा नै सत्यतर्फ, निम्न श्रेणीको सत्यबाट उच्च श्रेणीको सत्यतर्फ अग्रसर भइरहेको छ । हिन्दुको मतानुसार निम्नतम जडपूजावाददेखि लिएर सर्वोच्च ब्रह्मवादसम्म जति धर्म छन् ती सबै आ-आफ्नो जन्म तथा साहचर्यको अबस्थाद्वारा निर्धारित भएर त्यो असीमको ज्ञान तथा उपलब्धिका निमित्त मानव आत्माका विविध प्रयत्नहरू हुन् र ती प्रत्येक प्रयत्नहरूले उन्नतिको एक अबस्थालाई सूचित गर्दछन् । प्रत्येक जीव त्यो युवा गरुड पक्षी बराबर हो जो बिस्तारै माथितर्फ उडिरहेको तथा अधिकाधिक शक्तिसम्पादन गर्दै अन्तमा त्यो चम्किलो सूर्यसम्म पुग्दछ ।

अनेकतामा एकता प्रकृतिको विधान हो र हिन्दुहरूले यसलाई स्वीकार गरेका छन् । अन्य प्रत्येक धर्ममा केही निर्दिष्ट मतवादलाई विधिसम्मत गरिएको छ र सारा समाजलाई त्यो पालना गर्न अनिवार्य गराइएको हुन्छ । त्यो समाजका अगाडि केवल एउटा कोट राखिदिइन्छ जो जैक, जान र हेनरी सबैलाई ठिक हुनुपर्दछ । यदि त्यो जान या हेनरीको शरीरमा ठिक हुन आएन भने उसले आफ्नो शरीर ढाक्नका लागि कोट बिना नै रहनुपर्दछ । हिन्दुहरूले यो थाहा पाएका छन् निरपेक्ष ब्रह्म तत्वको साक्षात्कार चिन्तन या वर्णन केवल सापेक्षको साहाराद्वारा नै हुनसक्दछ र मूर्तिहरू, क्रुस या नवोदित चन्द्र केवल विभिन्न प्रतीकहरू हुन् र मानौं ती विभिन्न किलाहरू हुन् जसमा धार्मिक भावनाहरू झुन्डाइने गरिन्छ । यो होइन कि यी प्रतीकहरू सबैलाई आवश्यक होस् तर जसलाई आफ्नो लागि यी प्रतीकहरूको सहायताको आवश्यकता छैन उनीहरूलाई यो भन्ने अधिकार हुनेछैन कि त्यो गलत हो । हिन्दु धर्ममा यो अनिवार्य छैन ।



एउटा कुरा यहाँहरूलाई अवश्य बताइदिऊँ । भारतवर्षमा मूर्तिपूजालाई

कुनै अर्घेल्याइँ मानिदैंन । त्यो व्यभिचारकी जननी होइन । बरु त्यो त अविकसित मनका लागि उच्च आध्यात्मिक भाव ग्रहण गर्ने उपाय हो । अवश्य, हिन्दुहरूको धेरै प्रकारका दोष छन् । यी उनीहरूका कोही आफ्नै अपवाद हुन् तर यस  कुरामा ध्यान राख्नुहोस् कि उनीहरूको त्यो दोष आफ्नो शरीरलाई उत्पीडित गर्नमा सम्म सीमित छ । ऊ कहिल्यै आफ्नो छिमेकीको गर्धन काट्न जाँदैन । एउटा धर्मान्ध हिन्दुले चाहे आफूले आफैलाई चितामा जलाओस् तर ऊ विधर्मीहरूलाई जलाउनका लागि 'इन्विजिशन'  को अग्नि कहिल्यै पनि प्रज्वलित गर्दैन । अनि त्यति मात्र कुरामा ऊभन्दा उसको धर्मलाई अधिक दोषी ठहराउन सकिँदैन, जति दोष डाइनाहरूलाई जलाउँदा ईसाई धर्ममाथि लगाउन सकिन्छ ।

अतः हिन्दुहरूको दृष्टिमा समस्त धर्म-जगत् भिन्न भिन्न रुचिवाला स्त्री पुरुषको विभिन्न अवस्थाहरू एवम् परिस्थितिहरूबाट भएर एउटै लक्ष्यतर्फको यात्रा हो या प्रगति हो । प्रत्येक धर्मले जड भावापन्न मानवद्वारा एउटा ईश्वरको उद्भव गरिरहेको छ र त्यही ईश्वर ती सबैको प्रेरक बनेको छ । उसो भए यति ठूलो परस्पर विरोध किन हुन्छ ? हिन्दुहरूको भनाइ छ कि यो विरोध केवल आभास मात्र हो । त्यसको उत्पत्ति भिन्न अवस्था र प्रकृति अनुरुप आफ्नो समायोजन गर्दाका बखत सत्यद्वारा हुने गर्दछ ।

उही एक ज्योती भिन्न भिन्न रङ्का काँचबाट भिन्न भिन्न रुपमा प्रकट हुन्छ। समायोजनका लागि यसप्रकारका स-साना विविधता आवश्यक छ। परन्तु प्रत्येकको अन्तस्तलमा त्यही सत्यको राज छ। ईश्वरले आफ्नो कृष्णावतारमा हिन्दुहरूलाई यो उपदेश दिएका छन्, 'प्रत्येक धर्ममा म मोतिको मालामा धागाको तरह उनिएको अवस्थामा छु [१२] जहाँ पनि होस् मानव सृष्टिलाई उन्नत बनाउने र पावन गराउने अतिसय पवित्रता र असाधारण शक्ति तिमीमा देखा पर्दछ भने यो जानकि त्यो मेरो तेजको अंशबाट उत्पन्न भएको हो।'[१३] अनि यस शिक्षाको परिणाम के भएको छ ? सारा संसारलाई मेरो यही चुनौती छ उसले समग्र संस्कृत दर्शन शास्त्र भित्रबाट मलाई एउटा यस्तो उक्ति देखाओस् जसमा भनिएको होस् केवल हिन्दुहरूको उद्धार हुनेछ, अरुको हुनेछैन। व्यास भन्दछन्, "हाम्रो जाति र सम्प्रदायको सीमाभन्दा बाहिर पनि पूर्णत्व प्राप्त गरेका मानिसहरू छन्।"[१४] एउटा अर्को पनि कुरा छ, ईश्वरमा नै आफ्नो सम्पूर्ण विचारहरूलाई केन्द्रित गर्ने हिन्दु, अज्ञेयवादी बौद्ध धर्म र निरीश्वर वादी जैन धर्ममाथि कसरी श्रद्धा राख्न सक्दछ ?

यद्यपि बौद्ध तथा जैन ईश्वरमाथि निर्भर गर्दैनन् तथापि उनीहरूको धर्मको पूराशक्ति प्रत्येक धर्मको महान् केन्द्रिय सत्य–मनुष्यमा ईश्वरत्वको विकासतर्फ उन्मुख छ । उनीहरूले पितालाई नदेखेको भएपनि नातिलाई अवश्य देखेका छन् । अनि जसले पुत्रलाई देख्दछ उसले पितालाई पनि देखेको हुनुपर्छ ।

बन्धुहरू हो ! हिन्दुहरूको धार्मिक विचारहरूको यही नै संक्षिप्त रुपरेखा हो । हुनसक्छ, हिन्दु आफ्नो सम्पूर्ण योजनाहरूलाई कार्यान्वयन गर्नमा असफल रहेको छ, तर यदि कसैलाई कुनै सार्वभौमिक धर्म हुनु छ भने त्यो कुनै देश या कालद्वारा सीमाबद्ध हुनुहुँदैन, त्यो उही असीम ईश्वरका नै झैँ असीम हुनेछ, जसलाई उसले उपदेश देला, र जसको सूर्य श्री कृष्ण तथा ईसाका अनुयायीहरू, सन्तहरू तथा पापीहरूमाथि समानरुपबाट प्रकाश छर्ने छ, जो न त ब्राह्मण हुनेछ न बौद्ध हुनेछ, न ईसाई र न इश्लाम बरु यी सबैको समष्टि हुनेछ तर फेरि पनि जसमा विकासका

लागि अनन्त अवकाश होला र जो यति उदार हुनेछ कि पशुहरूको स्तरभन्दा किञ्चित उन्नत निम्नतम घृणित जङ्गली मनुष्यदेखि लिएर आफ्नो हृदय तथा मस्तिष्कको गुणहरूका कारण मानवताभन्दा धेरै माथि उठेको, उच्चतम मनुष्यसम्मलाई जसप्रति सारा समाज श्रद्धाले निहुरन्छ र त्यस्ता मानिसहरू जसलाई मनुष्य हो कि हैन भन्नेमा शंका गरिन्छ यी सबैलाई आफ्ना हातहरूद्वारा अङ्कमाल गर्न सकोस् र त्यसमा सबैलाई स्थान दिन सकोस् । त्यो धर्म यस्तो हुनेछ जसको नीतिमा उत्पीडिन या असहिष्णुताको स्थान हुनेछैन । उसले प्रत्येक स्त्री र पुरुषमा दिव्यता रहेको स्वीकार गर्ला र उसको सम्पूर्ण बल र सामर्थ्य मानवतालाई आफ्नो सच्चा दिव्य प्रकृतिको साक्षात्कार गर्नका लागि सहायता दिनमा नै केन्द्रित हुनेछ ।

तपाइँ यस्तै नै धर्मलाई अगाडि राख्नुहोस् अनि सम्पूर्ण राष्ट्र तपाइँको अनुयायी वन्न जानेछ । सम्राट् अशोकको परिषद् बौद्ध परिषद् थियो । अकबरको परिषद् बढी उपयुक्त हुँदाहुँदै पनि केवल गोष्ठीमा मात्र सीमित थियो । किन्तु अमेरिकालाई पृथ्वीको कुनाकुनामा यो घोषणा गर्न पाउने गौरव सुरक्षित थियो कि ' प्रत्येक धर्ममा ईश्वर छ । '

त्यो, जो हिन्दुहरूको ब्रह्मा, पारसिहरूको अहुर्मज्द, बौद्धहरुको बुद्ध, यहूदीहरूको जिहोवा र ईसाईहरूको स्वर्गस्थ पिता हो, ती सबैले तपाईं सबैका आ-आफ्नो उदार उद्देश्यहरू कार्यान्वयन गर्ने शक्ति प्रदान गरून् । नक्षत्र पूर्व आकाशमा उदित भएर कहिले धमिलो र कहिले प्रकाशमान् हुँदै विस्तारै विस्तारै पशिचमतर्फ यात्रा गर्दैगर्दै त्यसले समस्त जगतलाई परिक्रमा गरी अब त्यो फेरि पूर्वकै क्षितिजमा सहस्र गुणा अधिक ज्योतिका साथ उदय भइरहेको छ !

हे स्वाधिनता कि मातृभूमि कोलम्बिया, (अमेरिकाको अर्को नाम) कोलम्वसले यसलाई पत्ता लगाएका थिए त्यसैले यसको नाम कोलम्बिया रहन गयो । तिमी धन्य छौ ! यो तिम्रै नै सौभाग्य हो कि तिमीले आफ्नो छिमेकीहरूको रगतबाट आफ्नो हात कहिल्यै भिजाइनौ, तिमीले आफ्ना छिमेकीहरूका सर्वस्व हरण गरेर सजिलै धनि तथा सम्पन्न हुने चेष्टा गरिनौ, त्यसैले समन्वयको ध्वजा फहराउँदै सभ्यताकी अग्रणी भएर अघि बढ्ने सौभाग्य तिमीलाई नै थियो ।

ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ ॐ




## २० सेप्टेम्बर, १८९३ ई. सं

# धर्म भारतको मुख्य आवश्यकता होइन

ईसाईहरूले सही आलोचना सुन्नका लागि सदैव तयार रहनुपर्दछ र मलाई विश्वास छ यदि मैले यहाँहरूको कुनै आलोचना गरेँ भने तपाइँहरूले नरम्रो ठान्नु हुने छैन । तपाइँ ईसाईहरू जो मूर्तिपूजा गर्नेहरूको आत्माको उद्धार गर्नका निमित्त आफ्नो धर्म प्रचारकहरूलाई पठाउनका लागि यति धेरै उत्सुक रहनुहुन्छ भोकका कारण उनीहरूको शरीर मरेर जानबाट बचाउनका लागि किन केही गर्नुहुन्न ? भारत वर्षमा जब भयानक अनिकाल परेको थियो त्यतिबेला हजारौं लाखौं हिन्दुहरू भोकबाट पीडित भएर मरे तर तपाईं ईसाईहरूले उनीहरूका लागि केही गर्नुभएन । तपाइँहरू हिन्दुस्तानभरि गिरजाघर बनाउनुहुन्छ तर पूर्वको प्रमुख अभाव धर्म होइन, उनीहरूसँग धर्म पर्याप्त छ–जलिरहेको हिन्दुस्तानका लाखौं दुःखले छटपटाइरहेका भोका जनता शुष्क गलाले रोटीका लागि चित्कार गरिरहेका छन् । उनीहरू हामीसँग रोटी माग्दछन् तर हामी उनीहरूलाई पत्थर बर्षाउँछौं ! भोकबाट आत्तिएकाहरूलाई धर्मको उपदेश दिनु उनीहरूप्रति अपमान गर्नु हो, भोकाहरुलाई दर्शन सिकाउनु उनीहरूप्रति अपमान गर्नु हो । भारतबर्षमा यदि कोही पुरोहीत धन प्राप्तिका लागि उपदेश गर्छ भने उसलाई जाति च्यूत गरदिन्छ र दुनियाँले उसलाई थुक्नेछन् । म यहाँ आफ्ना दरिद्र भाइबन्धुहरूका निमित्त सहायता माग्न आएको थिएँ तर मैले यो राम्ररी बुझें कि मूर्तिका पूजारीहरूलाई ईसाई धर्मावलम्बीहरूसँग तथा विशेष गरेर उनीहरूको देशमा सहायता प्राप्त गर्नु कति कठिन छ ?

## २६ सेप्टेम्वर, १८९३ ई.सं.

# हिन्दु धर्मको पूर्णतामा नै बौद्ध धर्मको सिद्धि

म बौद्ध धर्मावलम्वी होइन जुन कुरा यहाँहरूले सुन्नुभएकै छ । त्यति हुँदाहुँदै पनि फेरि म भन्छु, म बौद्ध हूँ । यदि चीन, जापान अथवा सीलोन ती महान् तथागतका उपदेशहरूको अनुशरण गर्छन् भने भारतबर्ष उनलाई पृथ्वीमा ईश्वरको अवतार मानेर पूजा गर्दछन् । तपाईंहरूले भर्खरै सुन्नुभयो म बौद्ध धर्मको आलोचना गर्नेवाला हूँ । परन्तु त्यसबाट यहाँहरूले केवल यति मात्र बुझ्नु पर्दछः जसलाई म यस पृथ्वीमा ईश्वरको अवतार मान्दछु त्यसको आलोचना ! मबाट यो सम्भव छैन । यति हुँदाहुँदै पनि बुद्धका विषयमा हाम्रो धारणा यो छ कि उनका चेलाहरूले उनका शिक्षालाई ठीकठीक बुझेनन् । हिन्दु धर्म ( हिन्दु धर्म भन्नाले मेरो तात्पर्य वैदिक धर्म हो ) तथा जो आजभोलि बौद्ध धर्म भनिन्छ यिनीहरूमा आपसमा त्यस्तो सम्बन्ध छ जस्तो यहूदी तथा ईसाई धर्महरूमा । इसामसीह यहूदी थिए र शाक्यमुनि हिन्दु । यहूदीहरूले ईसाईलाई केवल अस्वीकार मात्र गरेनन् उनलाई सूलीमा पनि चढाइदिए, हिन्दुहरूले शाक्यमुनिलाई ईश्वरको रुपमा ग्रहण गरेका छन् र तिनीहरू उनलाई पूजा गर्दछन् । किन्तु प्रचलित बौद्ध धर्ममा तथा बुद्ध धर्मका शिक्षाहरूमा जो वास्तविक भेद हामी हिन्दुहरू देखाउन चाहन्छौं त्यो विशेष गरेर यो हो कि शाक्यमुनि कोही नयाँ शिक्षा दिनका लागि अवतीर्ण भएका थिएनन् । उनी पनि ईसाका झैं समान धर्मको पूर्णताका लागि आएका थिए, त्यसको विनाश गर्नका लागि होइन । अन्तर यति मात्रै थियो जहाँ ईसालाई प्राचीन यहूदीहरूले बुझ्न सकेनन्, यता बुद्व देवका शिक्षाहरूको महत्वलाई स्वयम् उनैका शिष्यहरूले बुझ्न सकेनन् । जुन प्रकारले यहूदीहरूले प्राचीन व्यवस्थाको पूर्णता बुझ्न सकेनन् त्यसै प्रकारले बौद्धहरूले पनि हिन्दु धर्मका सत्यहरूको पूर्णतालाई बुझ्न सकेनन् । म यस कुरालाई फेरि पनि दाहोऱ्याउन चाहन्छु कि शाक्यमुनि विध्वंश गर्नका लागि आएका थिएनन् । बरु उनी हिन्दु धर्मकै पूर्णता थिए, त्यसैको तार्किक परिणति र

युक्तिसंगत विकास पनि थिए ।

–हिन्दु धर्मका दुई भाग छन् कर्मकाण्ड र ज्ञानकाण्ड । ज्ञानकाण्डको विशेष अध्ययन सन्यासीजन गर्दछन् ।

ज्ञानकाण्डमा जाति भेद छैन । भारतवर्षमा उच्च तथा नीच जातिका मानिसहरू सन्यासी हुन सक्दछन् । त्ससपछि दुबै जातहरू समान हुन जान्छन् । धर्ममा जाति भेद छैन । जाति त एउटा सामाजिक संस्था मात्र हो । शाक्यमुनि आफै सन्यासी थिए र यो उनैको नै गरिमा हो कि उनको हृदय यति विशाल थियो उनले 'वेदहरू' मा लुकेर रहेका सत्यहरूलाई निकालेर त्यसलाई समस्त संसार मा छरिदिए । यस संसारमा उनी नै यस्ता भए जसले धर्म प्रचार को प्रथा चलाए–यतिमात्र होइन, मनुष्यलाई अरुको धर्मबाट आफ्नो धर्ममा दीक्षित गर्ने विचार पनि सबभन्दा पहिले उनकै मनमा उदय भएको हो ।



सम्पूर्ण प्राणीहरूप्रति र विशेष गरेर अज्ञानी तथा दीन दुःखीहरूका प्रति अद्‌भुत सहानुभूतिमा नै तथागतको महान् गौरव लुकेको छ । उनका केही शिष्य ब्राह्मण थिए । बुद्धको धर्मोपदेशका समयमा सँस्कृत भारतको जनभाषा भइसकेको थिएन । सँस्कृत त्यसबखत केवल पण्डितहरूका ग्रन्थहरूको नै भाषा थियो । बुद्ध देवका केही ब्राह्मण चेलाहरूले उनका उपदेशहरूको अनुवाद सँस्कृत भाषामा गर्न चाहेका थिए तर बुद्ध देव उनीहरूलाई सधैं यही भन्दथे, "म दरीद्र एवम् साधारण मानिसहरूको लागि आएको हुँ, त्यसैले जनभाषामा नै बोल्न दिनुहोस् ।" र यसै कारणले उनका अधिकांश उपदेश अहिलेसम्म भारतको तात्कालिन लोक भाषामा नै पाइन्छ ।

दर्शन शास्त्रको स्थान जेसुकै होस्, तत्व ज्ञानको स्थान जे सुकै होस्,



तर जबसम्म यस लोकमा मृत्यु नामको वस्तु रहिरहन्छ, जबसम्म मानव हृदयमा दुर्बलता जस्तो वस्तु रहिरहन्छ, तबसम्म मनुष्यको अन्तः स्करणबाट दुर्बलताजनित करुणकन्धन बाहिर निस्कन्छ तबसम्म यस संसारमा ईश्वरमाथिको विश्वास पनि र हिरहनेछ ।

जहाँसम्म दर्शनको कुरा छ, तथागतका शिष्यहरूले वेदहरूका सनातन चट्टानहरूमाथि धेरै हातखुट्टा बजारे तर त्यसलाई फुटाउन सकेनन् र अर्कोतर्फ उनीहरूले जनताका बीचबाट त्यो सनातन परमेश्वरलाई झिकिदिए जसमा प्रत्येक नरनारी यति धेरै आस्थासहित  आश्रय लिन्छन् । फल यो भयो कि बौद्ध धर्मलाई भारतबर्षमा स्वाभाविक मृत्यु प्राप्त गर्नु पर्‍यो र अहिले यस धर्मलाई जन्मभूमि भार तमा आफूलाई बौद्ध भनाउनेवाला एउटा पनि स्त्री वा पुरुष छैनन् ।

किन्तु यसको साथसाथै ब्राह्मण धर्मले पनि केही गुमायो–समाज सुधारको त्यो उत्साह, प्राणीमात्रका प्रति त्यो आश्चर्यजनक सहानुभूति तथा करुणा एवम् त्यो अद्‌भुत रसायन जसबाट बौद्ध धर्मले जनजनलाई प्रदान गरेको थियो एवम् जसको फलस्वरुप भारतीय समाज यति महान् हुन गएको थियो कि तत्कालिन भारतका सम्बन्धमा लेख्नेवाला एउटा यूनानी इतिहासकारलाई यो लेख्नु पर्‍यो कि एउटा पनि यस्तो हिन्दु देखिएन जो मिथ्या भाषण गरेको होस्, एउटा पनि यस्ती हिन्दु नारी छै न जो पतिव्रता नहोस् ।

हिन्दु धर्म बौद्ध धर्मविना रहन सक्दैन न बौद्ध धर्म हिन्दु धर्मविना रहन सक्छ । तब यो बुझ्नुहोस् हामीहरूको पारस्परिक पृथकताले यो स्पष्ट रुपबाट प्रकट गरिदिएको छ कि बौद्ध, ब्राह्मणहरूका दर्शन र मस्तिष्क बिना रहन सक्दैन, साथै न ब्राह्मण बौद्धहरूको विशाल हृदयबिना । बौद्ध र ब्राह्मणका बीच यो भिन्नता भारत वर्षको पतनको कारण हो । यही कारणले हो कि अहिले भारतमा तीस करोड भिखमङ् गा वास गर्दछन् र त्यो एक हजार वर्षहरूदेखि विजेताहरूको दास बनेको छ । अतः आउनुहोस्, हामी ब्राह्मणहरूको यस अपूर्व बुद्धिका साथ तथागतको हृदय, महानुभावता र अद्‌भुत लोकहितकारी शक्तिलाई मिलाइदिऊँ ।



## २७ सेप्टेम्वर, १८९३ ई.स.

# अन्तिम अधिवेशनमा दिइएको भाषण

विश्व धम-महासभा एक मूर्तिमान तथ्य सावित हुन गएको छ। ती मानिसहरू जजसले यस सभाको आयोजन गर्नमा सहायता पुऱ्याउनु भयो उहाँहरूको निःस्वार्थ श्रमलाई दयामय प्रभुले सफलता मार्फत विभूषित गर्नु भएको छ ।

ती महानुभावहरूलाई मेरो धन्यवाद छ, जसको विशाल हृदय तथा सत्यप्रतिको अनुरागले सर्वप्रथम यस अद्‌भुत स्वप्नलाई देख्यो र त्यसलाई कार्यरूपमा परिणत गऱ्यो । ती उदार भावहरूलाई मेरो धन्यवाद जसद्वारा यस सभा रसमा डुबुल्किमारिरहेको छ । यो प्रबुद्ध श्रोता मण्डलीलाई मेरो धन्यवाद जसले ममाथि अति ठूलो कृपा देखाएको छ र जसले मतमतान्तरको मनोमालिन्यलाई हलुङ्गो वनाउने प्रयत्न गर्ने सिलसिलामा प्रत्येक विचारको सम्मान गरेको छ । यसको लयबद्धताका बीचबीचमा केही भङ्गीकृत स्वरहरू पनि सुन्नमा आएका छन्, तिनीहरूलाई मेरो अझै विशेष धन्यवाद छ किनकि उनीहरूले आफ्नो स्वर विचित्रताले गर्दा यो समरसतालाई झनै बढी मिठासयुक्त बनाइदिनुभएको छ । धार्मिक एकताको सर्वमान्य आधारशीलाका सम्बन्धमा केही भनिसकिएको छ। अहिले म त्यस सम्बन्धमा आफ्नो विचार यहाँहरू समक्ष राख्दिन । तर यदि यहाँ कसैले यो आशा गरिरहेको छ कि यो एकता कुनै धर्मको विजय वा बाँकी अरू सबै धर्महरूको विनाशद्वारा सिद्ध हुनेछ, यदि त्यस्तो सोचिएकोछ भने उहाँलाई मेरो भन्नु यो छ कि-' भाइ तपाईँको यो आशा पूर्ण हुनसक्दैन ।' के म यो चाहन्छु ईसाईजन हिन्दु भएर जाऊन् ? कदापि होइन, ईश्वर यस्तो गर्नु हुन्न ! के मेरो यो इच्छा छ कि हिन्दु या बौद्धहरू ईसाई बनून् ? ईश्वरले यस प्रकारको चाहनालाई कहिल्यै पूर्ण हुन दिनुहुने छैन बीजलाई भूमिमा रोपिदिएको छ र हावा, पानी तथा माटोलाई त्यस बीउको वरिपरि राखिदिएको छ भने के त्यो बीज माटो भएर जान्छ, अथवा हावा या पानी बनेर जान्छ ? होइन, जाँदैन । त्यो वृक्ष नै हुन्छ र आफ्नो बृद्धिको नियम




अनुसार बढ्दछ हावा, पानी र माटोलाई पचाएर त्यसलाई उम्रने पदार्थमा परिवर्तन गरेर एउटा वृक्ष बन्न जान्छ ।

धर्मका सम्वन्धमा पनि यही कुरा लागू हुन्छ । ईसाई हिन्दु या बौद्ध हुन जानु हुँदैन तथा न हिन्दु वा बौद्धले ईसाई नै । तर प्रत्येकलाई यो आवश्यक छ कि उसले अरूको सार भागलाई आत्मासात् गरेर पुष्टता प्राप्त गरोस् र आफ्नो विशिष्टताको रक्षा गर्दै स्व(बृद्धिमा प्राप्त हुन जाओस् ।

यस धर्म महासभाले संसारका सामु यदि केही देखाउन सकेको छ भने त्यो यो हो : त्यसले यो सिद्ध गरिदिएको छ कि शुद्धता, पवित्रता र दयाशीलता कुनै एक सम्प्रदाय विशेषको ऐकान्तिक सम्पति होइन र साथ, प्रत्येक धर्मले श्रेष्ठ एवं अतिशय उन्नत चरित्रयुक्त नर(नारीको जन्म दिएको छ। अब यी प्रत्यक्ष प्रमाणहरूको बावजुद पनि यदि कसैले यस्तो सपना देख्छ कि अरू सम्पूर्ण धर्म नष्ट भएर जानेछ र केवल उसको धर्म मात्र जीवित रहनेछ, यदि यस्तो उसमा छ भने म हृदयदेखि नै उप्रति दया राख्दछु र उसलाई स्पष्ट बताइदिन्छु कि छिट्टै नै सारा प्रतिरोधको बावजुद पनि प्रत्येक धर्मको धर्मध्वजामा यो लेखिएको हुनेछ–**'सहायता गर, लडाईं नगर ।' 'अरूको भावलाई आत्मसात गर, त्यसको उपेक्षा नगर' 'मतभेद र झ-झगडामा होइन, समन्वय र शान्तिमा विश्वास गर !'**

# श्लोकहरू

## धर्म-महासभामा सम्बोधनका क्रममा स्वामी विवकानन्द द्वारा उद्धृत



१

**रुचीनां वैचित्र्यादृजुकुटिलनानापथजुषाम् ।**
**नृणामेको गम्यस्त्वमसि पयसामर्णव इव ॥**

जसरी विभिन्न नदीहरू भिन्न भिन्न स्रोतहरूबाट निस्केर समुद्रमा मिल्दछन्, सोही अनुसार हे प्रभो ! भिन्न भिन्न रुचीका कारण विभिन्न वाङ्गा टेढा अथवा सिधा मार्ग भएर जाने मानिसहरू पनि आखिरमा हजुरमा नै आएर मिल्दछन् । '

२

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम् ।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः ॥**

म भएतिर आउने जो कोही किन नहोस् र .... कुनै पनि प्रकारले आएको किन नहोस् उसका लागि म प्राप्त हुन्छु । मानिस भिन्नभिन्न मार्गद्वारा प्रयत्न गर्दै ' अन्तमा म भएतिर नै आउँछ । '

३

**सूर्याचन्द्रमसौ धाता यथापूर्वमकल्पयत् ।**

यी सूर्य र चन्द्रमालाई विधाताले अघिल्लो कल्पका सूर्य र चन्द्रमा समान निर्माण गरेका हुन्

४

नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावक : ।
न चैनं क्लेदयन्त्यापो न शोषयति मारुत : ॥

गीता : ॥२। २३॥

' त्यसलाई हतियारले काट्न सक्दैन, अग्निले डढाउन सक्दैन, पानीले भिजाउन सक्दैन र हावाले सुकाउन सक्दैन ।'

५

शृण्वन्तु विश्वे अमृतस्य पुत्रा आ ये धामानि दिव्यानी तस्थु ।
...वेदाहमेतं पुरुषं महान्तमादित्यवर्ण तमसः परस्तात् । तमेव विदि
दत्वा तिमृत्युमेति नान्यः पन्था विद्यतेयनाय ॥

श्वेताश्वतरोपनिषद्॥२।५;३(८॥

'हे अमृतका पुत्रहरू ! सुन, हे दिव्यधामवासी देवगण !! तिमी पनि सुन, मैले त्यो अनादि पुराण पुरुषलाई प्राप्त गरेको छु, जो समस्त अज्ञान अन्धकार र मायाभन्दा माथि छ । केवल त्यस पुरुषलाई जानेर मात्र तिमी मृत्युको चक्रबाट छुट्न सक्दछौ । अर्को कुनै बाटो छैन ।'

६

भयादस्याग्निस्तपति भयात्तपति सूर्यः ।
भयादिन्द्रश्च वायुश्च मृत्युर्धावति पञ्चम : ॥

कठोपनिषद् ॥२।३।३॥

'जसको आदेशले वायु चल्दछ, अग्नि बल्दछ, बादल वर्षाउँदछ र मृत्यु पृथ्वीमा नाच्दछ ।'

७

न धनं न जनं न च सुन्दरीं कवितां वा जगदीश कामये ।
मम जन्मनि जन्मनीश्वरे भवताद्भक्तिरहैतुकी त्वयि ॥

शिक्षाष्टक ॥४॥

'हे भगवान', मलाई न त सम्पति चाहिन्छ, न सन्तति, न विद्या । यदि तिम्रो इच्छा छ भने हजारपटक जन्म मृत्युको चक्रमा पर्न तयार छु, तर हे प्रभो ! केवल शक्तिमात्र देउ कि म फलको आशा छाडेर तिम्रो भक्ति गर्न पाउँ, केवल प्रेमका लागि नै तिमी उपर मेरो निःस्वार्थ प्रेम बनोस् ।'

## ८

नाहं कर्मफलान्वेषी राजपुत्रि चराम्युत ।
ददामि देयमित्येव यजे यष्टव्यमित्युत ॥
धर्म एव मनः कृष्णे स्वभावाच्चैव मे धृतम् ।
धर्म वाणिज्यको हीनो जघन्यो धर्मवादिनाम् ॥

-महाभारत, वनपर्व ॥३१।२।५॥

म कुनै कुराको लागि त्यससँग प्रार्थना गर्दिन, कुनै कुरा माग्दिन । उसलाई जहाँ मन लाग्छ मलाई त्यहीं राखोस् । म त सबै अवस्थामा केवल प्रेमका लागि नै उससँग प्रेम गर्न चाहन्छु, म प्रेममा सौदा (व्यापार) गर्न सक्दिन ।

## ९

भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः ।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे ॥

-मुण्डकोपनिषद् ॥२।२।८॥

पवित्र तथा निर्मल मानिसले यसै जीवनमा ईश्वर दर्शन प्राप्त गरेर कृतार्थ बन्दछ । त्यसपछि उसको समस्त कुटिलताहरू नष्ट भएर जान्छन्, सम्पूर्ण सन्देहहरू हटेर जान्छन् ।

## १०

उत्तमो ब्रह्मसद्भावो ध्यानभावस्तु मध्यम ः।
स्तुतिर्जपोधमो भावो बहिः पूजा धमाधम ॥

-महानिर्वाण तंत्र ॥४।१२॥

अगाडि बढ्ने प्रयास भइरहेको बेला मानसिक प्रार्थना साधनाको दोस्रो अवस्था हो र सबैभन्दा उच्च अवस्था त त्यो हो जब परमेश्वर साक्षात्कार हुनजान्छ ।



## ११

न तत्र सूर्यो भाति न चन्द्रतारकं नेमा विद्युतो भान्ति कुतो यमग्नि :।
तमेव भान्तमनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥

-कठोपनिषद् ॥२।२।१५॥

'सूर्य त्यस परमात्मालाई प्रकाशित गर्न सक्दैन न त चन्द्रमा या तारा गणले नै। त्यो विद्युतप्रभा पनि परमेश्वरलाई उद्भाषित गर्न सक्दैन तब यो मामूली अग्निको त कुरा नै के ! यी सबै उही परमेश्वरका कारण प्रकाशित हुन जान्छन्।'

## १२

मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव ॥

गीता ॥ ७ । ७ ।

'प्रत्येक धर्ममा म मोतिको मालामा धागाको तरह उनिएको अवस्थामा छु।'

## १३

यद्यद्विभूतिमत्सत्वं श्रीमदर्जितमेव वा ।
तत्तदेवावगच्छ त्वं मत तेजोंशसम्भवम् ॥

-गीता ॥ १० ।४१ ॥

'जहाँ पनि होस् मानव सृष्टिलाई उन्नत बनाउने र पावन गराउने अतिसय पवित्रता र असाधारण शक्ति तिमीमा देखा पर्दछ भने यो जानकि त्यो मेरो तेजको अंशबाट उत्पन्न भएको हो।'

## १४

अन्तरा चापि तु तद्दृष्टे : ॥

वेदान्त सूत्र ॥ ३ । ४ ।३६॥

'हाम्रो जाति र सम्प्रदायको सीमाभन्दा वाहिर पनि पूर्णत्व प्राप्त गरेका मानिसहरू छन्।'










# आदर्श मर्यादापुरूष श्रीरामकृष्ण परमहंस

जगत्‌मा जबजब धर्म र अध्यात्मको ह्रास हुन्छ, तबतब धर्मको पुनःस्थापनका लागि भगवानको विशेषशक्तिको प्रादुर्भाव हुन्छ। यी प्रत्येक अवतारमा शक्तिको आधार, विविध भावको प्रतीक एवं सत्यको मूर्त विग्रह हो। भगवानको जुन शक्ति पूर्वयुगमा श्रीराम र श्रीकृष्णका रूपमा अवतरित भएको थियो त्यही शक्ति वर्तमानयुगमा रामकृष्णका रूपमा अवतरण भएको हो। यस पटक विश्वका सबै धर्ममा बडो व्यापक रूपबाट धर्मग्लानि उपस्थित भएको छ र श्रीरामकृष्ण सबै धर्मलाई निर्मल, दोषमुक्त गर्न आउनु भएको हो। उहाँ कुनै विशेष धर्म, जाति वा कुनै विशेष राष्ट्रका लागि आउनु भएको होइन, तर समग्र मानवताको भलाईका लागि आउनुभएको हो। यही कारण हो कि हामी उहाँका जीवनमा सबै प्रकारका साधनाहरू सिद्धिलाभ भएको देख्न पाउँछौं। उहाँले आफ्नो साधनाबाट सबै धर्मको सत्यता प्रमाणित गर्नुभयो र यो पनि सिद्ध गर्नुभयो कि सबै धर्म ईश्वर उपलब्धिका लागि एउटा मार्ग हो। उहाँको कथन छ-सबै धर्म सत्य हो। जत्ति नै मत त्यत्ति नै पथ वा मार्ग वा बाटो उपनिषद्‌ले भन्छ क्षुरस्य धारा निशिता दुरत्यया, दुर्गं पथस्तत् कवयो वदन्ति। अर्थात् आत्मद्रष्टागणका भनाई छ कि धर्मपथमा चल्नु वा हिंड्नु त्यत्ति नै कठिन र कष्टसाध्य छ जत्ति छुरा वाचक्कुको तिखो धारमा हिंडनु। यसयुगमा श्रीरामकृष्णद्वारा गरिएका विधि साधन‌ामा विचार गर्दा उपनिषद्‌को यो उक्ति नितान्त सत्य सिद्ध हुन्छ। उहाँका जीवनमा विशेषरूपबाट यो हेर्न पाइन्छ कि ईश्वरप्राप्तिका लागि उहाँले महिनौं आहार र निद्रा परित्याग गर्नुभएको थियो। साधारण मनुष्य धेरै जन्मसम्म पनि कुनै एउटा धर्मको कठोर साधना गरेपछि मात्र ईश्वर प्राप्ति हुन्छ। श्रीरामकृष्ण नररूपधारी नारायण हुनुहुन्थ्यो, अतः उहाँका जीवनका सबैकुरा अलौकिक छन्। उहाँले आफ्नो जीवनमा विश्वका सबै प्रमुख धर्मको साधना गरी सत्यता सिद्ध गर्नुभयो।

श्रीरामकृष्णका साधना प्रसंगमा एउटा कुरा ध्यान दिनु उचित देखिन्छ त्यो हो : उहाँ एउटा धर्मको साधना पूरा गरेपछि अर्को वा दोश्रो धर्मको साधनामा लाग्नुभयो। एकपटक उहाँले एउटै धर्मको साधना गर्नुभएको थियो। जब उहाँ हिन्दूधर्मका विभिन्न मतहरूका साधना गरिरहनु भएको थियो तब उहाँ पूर्णरूपमा हिन्दू हुनुहुन्थ्यो, फेरि जब उहाँले ईस्लामधर्मको साधना गर्नुभयो त्यो समय उहाँ सम्पूर्णरूपमा मुसलमान हुनुभयो-यहाँसम्म कि ती दिनहरूमा उहाँले कालीमन्दिरमा पाइला टेक्न पनि जानु भएन। अरु सबै देवीदेवताको पूजाअर्चना बन्द गरिदिनु भयो र केवल अल्लाह मन्त्रको

जप गरिरहनु भयो । वर्तमानयुगमा सबै धर्मका समन्वय र ती धर्महरूको सत्यता प्रमाणित गर्नु अपरिहार्य भयो । हरेक धर्ममा अनुयायी अन्य धर्मावलम्बीप्रति सद्भाव राख्दै आरुनो धर्म र इष्ट वा कुलदेवतामा निष्ठा राख्दै साधना गर्नुभयो । यो एउटा महान् आदर्श श्रीरामकृष्णले आफ्नो जीवनमा प्रत्यक्ष देखाउनुभयो । सबै धर्मको सत्यता प्रमाणित गरी उहाँले जगत्मा सबैका लागि उनीहरूका आ-आफ्नो धर्मका महत्वबारे मा आश्वस्त पार्नुभयो । ईश्वर एउटै हुन् र सबै मनुष्य उहाँका अंश वा सन्तान हुन् । सबै जाति तथा सबै धर्मका मनुष्यमा भगवानप्रति समान र जन्मसिद्ध अधिकार छ । सत्यको उपलब्धिका लागि धर्मपरिवर्तनको कुनै पनि आवश्यकता पर्दैन । उहाँले भन्नुभयो-"ईश्वर सबैका चन्दामामा" हुनुहुन्छ । जो उहाँलाई चाहन्छ, उसले पाउँदछ ।" कुनैप्रकारले ईश्वरको चाहनाको लागि पुकार्नु पर्दछ । यो उहाँले आफ्नो जीवनमा साधना गरेर देखाउनु भयो । उहाँले आफ्नो अनुयायी भक्तसँग भन्नुभयो-"म साँचो छोडेर जान्छु, तिमीहरू त्यसैमा आफ्नो जीवनलाई कोर्नु वा कुँद्नु ।" उहाँ भन्नु हुन्छ-"मैले १६ आना गरेँ, तिमीहरू कमसेकम एकआना गर्नु ।" श्रीरामकृष्णको जीवनको प्रेरणा मुख्यतः यसैलोकमा प्रतिष्ठित छ । यो जन्ममा भगवद् प्राप्त गर्नुछ । यो पृथ्वीमा, यो जीवनमा र यही क्षण धर्मको प्रकाश पाउनु पर्दछ । आन्तरिकता, प्रबल उद्यम, ईश्वर निर्भरता र विवेकका सहायताले, जो जहाँ छ, महान् उत्साहका साथ अगाडि बढ र बढ्दै जाऊ । ईश्वरका अगाडि बढ्दै जाऊ । ईश्वरलाभमा सबैको समान अधिकार छ । पापी-पुण्यात्माको प्रश्न होइन, बाल-बालिका, वृद्ध-युवा, ब्रामण- चाण्डाल, पुरुष-स्त्रीको भेदभाव होइन । परमपिताका सन्तान हौं, सबैको उहाँप्रति समान अधिकार छ, सम्पूर्ण मानवजाति एउटै हो । यही नै भगवान् श्रीरामकृष्णको सन्देश हो । उहाँले सबैलाई अपनाउनु भयो, कसैलाई पनि त्याग वा तिरस्कार गर्नुभएन । एउटा नयाँ कुरा जुन श्रीर ामकृष्णले आफ्नो जीवनद्वारा बताउनुभयो, त्यो ईश्वर उपलब्धिका लागि पहाड-पर्वत, गुफा, तीर्थ, गुरुगृह वा कुनै अन्य दुर्गमस्थानमा जानु आवश्यक छैन । जो जहाँ छन, जुन धर्ममा जन्म भयो, त्यही आफ्नो जीवनको चरम लक्ष्य-ईश्वरदर्शन प्राप्त गर्न सक्तछन् । ईश्वरलाभ नै मानवजीवनको सर्वोपरि लक्ष्य हो र मनुष्य नै यो ब्रह्माण्डका सर्वोत्तम जीव वा प्राणी हो । यसकारण यो हो कि एउटैमात्र नरदेहधारी जीवमा नै पूर्णता प्राप्त गर्ने क्षमता हुन्छ । यहाँसम्म कि देवता र स्वर्गलोकका निवासीको पनि पूर्णताप्राप्तिका लागि यो मर्त्यलोकमा मनुष्ययोनिमा जन्म लिनु पर्दछ । लाखौं योनिमा भ्रमण गरेपश्चात् मानवदेह मिल्दछ । आफ्नो चेतनासत्ताको अनुभव मनुष्ययोनिमा हुने गर्दछ त्यस्तै अन्य कुनै योनिमा सम्भव हुँदैन । यसैले मानवजीवनलाई दुर्लभ भनेको छ । यसप्रकार हामी देख्दछौं कि श्रीरामकृष्णले आरुनो जीवनदर्शनद्वारा दुईवटा कुर ालाई विशेष महत्व प्रदान गर्नुभएकोछ- पहिलो यो कि ईश्वरलाभ नै जीवनका उद्देश्य हो र दोश्रो यो कि यो जीवनमा वा जुनीमा ईश्वरदर्शन गर्नै पर्दछ ।



# करुणारूपिणी श्रीशारदादेवी

श्रीशारदादेवी पुण्यमाताका रूपमा र श्रीर ामकृष्णकी यशस्विनी सहधर्मिणीका रूपमा सुविख्यात हुनुहुन्छ । श्रीरामकृष्णबाट उहाँलाई देवी स्वरुपिणीमाताको रूपमा प्रतिष्ठापित गर्नुभएकोले भक्तहरूका माझमा माताजीका नामले प्रख्यात हुनुभएको हो ।

श्रीहारदादेवीको चरित्रमा एउटा बडो दुर्बलता थियो-त्यो के हो भने कसैको आँखामा आँसु देख्न नसक्नु । उहाँको करुणामा पात्र अपात्र या स्थान कालको कुनै पनि भेद थिएन । एउटा महिला जो आफ्नो गल्तीका कारण पश्चाताप् भएको थियो । उनी माताजीका चरणमा आश्रय र शान्ति पाउन उपस्थित भइन् । मातृमन्दिरमा प्रवेश गर्न उनलाई संकोच भैरहेको थियो । अतः ढोकाबाहिरै उभिएर आफ्नो पाप र अपराध बताउँदै भनिन्-"आमा मेरो अब के हुन्छ ? म तपाईंकहाँ मन्दिरमा पस्न यो ग्य भइन ।" तब श्रीशारदादेवीले उनलाई अँगालो मारी स्नेहपूर्वक भन्नुभयो( "भित्र आऊ । पाप के हो तिमीले बुझ्यौ । पश्चाताप भैरहेछ । म तिमीलाई मन्त्र दिन्छु-ठाकुरजीको चरणमा सबै अर्पण गर्नु ।" बागबजारमा श्रीशारदादेवीको घरको सामुन्ने मजदूर बस्तीबाट एकजना महिला आफ्नो रुग्ण शिशु काखमा लिएर माताजीलाई प्रणाम गर्न आइन् । अहा ! उनीमाथि कत्ति दया गर्नुभयो, स्नेहभाव राख्नुभयो । श्रीशारदादेवीले बिरामी बच्चालाई आशीर्वाद दिँदै भन्नुभयो( "धेरै राम्रो हुनेछ । फेरि २ वटा अनार र अंगुर ठाकुरजीलाई चढाउँदै ती महिलाको हातमा दिईन् र भनिन् आफ्नो बालकलाई खुवाउनु ।" त्यस गरीब महिलाको आनन्दको सीमा नै थिएन बार म्बार श्रीशारदादेवीलाई प्रणाम गर्न लागिन् ।

अर्को कुनै दिन एकजना अंग्रेजमहिला आइन् र आफ्नी छोरीको भीषण रोगको कुरा बताउँदै रुमालले मुखछोपेर रुन थालिन् । ती अंग्रेजमहिलाका दुःख देखेर श्रीशारदादेवीको हृदय पग्लियो । प्रसादी फूल तथा वेलपत्र हातमा लिएर फेरि ठाकुरजीको तस्वीर हेरेर प्रसादी फूल र बेलपत्र उनीलाई दिँदै भनिन्-"यसलाई आफ्नी छोरीको शीरमा छोएर तकियामुनि राख्नु । तिम्रो छोरी ठीक हुनेछ ।" श्रीषारदादेवीको आशीर्वादका कारण ती बालिकाको रोग निको भयो ।

श्रीशारदादेवी सबैलाई त्यसमा पनि अल्पवयस्क बालकलाई पनि दीक्षा दिने गर्नुहुन्थ्यो । एक दिन १२ बर्षका बालक उद्बोधनमा आएर श्रीशारदादेवीलाई प्रणाम गर्दै उहाँको कृपा पाउनका लागि रुन थाले । बालक सम्झेर कसैले पनि वास्तै गरेनन् । दोश्रोदिन पनि तल्लो बरण्डामा बसिरहेको थियो । करुणामूर्ति श्रीशारदादेवीका लागि यो सह्य भएन र उसलाई बोलाउन पठाई दीक्षा दिनुभयो । उ दीक्षा मन्त्रपाएर आनन्दित हुँदै मिठाई र फल लिन गयो । यो देखेर सेवक भक्तले सोधे- "माता उ यति सानो बालकलाई हजूरले दीक्षा दिनुभयो ? उस्ले के सम्झन सक्छ र ?" श्रीशारदादेवीले उत्तर दिनुभया-"चाहे जो सुकै होस् । बच्चा होस्- हिजो खुट्टा ढोगेर कत्ति रोएको थियो । कोही भगवान् का लागि रुन्छ बताऊ त ? यस्तो बुद्धि कत्ति जनालाई आउँछ र ?"राँचीबाट एउटा बालक जगद्धात्रीपूजाका उपलक्ष्यमा जयरामवाटी आएका थिए । तर पूजाका भीडमा उसले आफ्नो दीक्षाको कुरा बताउने मौका नै मिलेन । जुन दिन उसलाई फर्कनु थियो, त्यही दिन श्रीशारदादेवीको स्वास्थ्य ठीक भएन । अरूसँगै त्यो बालक श्रीशारदादेवीको दर्शन गर्न गयो र श्रीशारदादेवीका चरणमा शीर राखेर रुन थाल्यो । यत्तिमात्र होइन कि उसको आँसुले श्रीशारदादेवीका चरण नै भिज्यो । करुणामयी श्रीशारदादेवीले बालकको हात समाएर स्नेहपूर्वक सोध्नुभया-"किन रोएको पुत्र ? के चाहिया, मन्त्र लिन्छौ ?" फेरि ढोका थुनेर उत्तिनैखेरि बालकलाई मन्त्र प्रदान गर्नुभयो ।

गडबेताको निकट एउटा गाउँबाट एक जना युवक दीक्षाका लागि आएका थिए । त्यो युवक बागदी (तल्लो जात) थियो र स्कूलमा पढाउँथ्यो । उसले माताजीलाई दीक्षाका लागि प्रार्थना गरे । त्यो युवकको व्याकुलता देखेर श्रीशारदादेवी सामाजिक विरोध या चर्चा तथा आफ्नो बिग्रंदो स्वास्थ्यलाई पनि पर्वाह नगरीकन मन्त्र दिन राजी हुनुभयो । भोलीपल्ट पूजा पश्चात् उहाँले बालकलाई मन्दिरमा बोलाएर दीक्षा दिनुभयो । ठाकुरजी जो भन्नुहुन्थ्या-"भक्तको जाति हुँदैन । सबै भक्त एउटै जातिका हुन् ।"

### स्वामी विवेकानन्दलाई आशीर्वाद

स्वामी विवेकानन्दलाई अमेरिकाको शिकागोमा सन् १८९३ सेप्टेम्बर महिनामा

## शिकागो भाषण

आयोजना हुनलागेको विश्वधर्म महासभामा भारतका तर्फबाट भाग लिन जानका लागि श्रीशारदादेवीले अनुमति र पूर्ण सफलताका लागि आशीर्वाद न्यौछावर गर्नुभएको थियो । श्रीशारदादेवीको आशीर्वाद लिएर सन् १८९३ सेप्टेम्बर ११ मा सम्पन्न प्रथम दिवसीय उद्‌घाटन अधिवेशनमा स्वामी विवेकानन्दको सारगर्भित सम्बोधनले विश्वकै उत्कृष्ट आध्यात्मिक छविका रूपमा रातारात चर्चाको शिखरमा पुर्‍यायो ।

सम्बोधनले विश्वकै उत्कृष्ट आध्यात्मिक छविका रूपमा रातारात चर्चाको शिखरमा पुर्‍यायो ।

प्यारी सुपुत्री निवेदिता

सन् १८६८ मार्च १७ को घटना निवेदिताका लागि महत्वपूर्ण थियो । किनभने त्यो दिन उहाँको जीवनको सबैभन्दा महत्वपूर्ण दिवस नै थियो श्रीशारदादेवीसँगको पहिलो भेट जो विश्वकै मातृशक्तिको रूपमा पूजित हुनुहुन्थ्यो । श्रीशारदादेवीले स्नेहका साथ निवेदिताको स्वागत गर्नु भै मेरी छोरी भनेर सम्बोधन गर्नुभएको थियो । केही समयपछि निवेदिताले लण्डनमा आफ्नो मित्रलाई लेख्नुभएको थियो, “आमा शुद्ध माधुर्यमयी हुनुहुन्छ, स्नेह र प्रेमले भरीपूर्ण ।”

निवेदिताले कोलकातामा कन्या स्कूलको कालीपूजाको पवित्र दिन १८६८ नोभेम्बर १३ तारिखका दिन श्रीशारदादेवीको करकमलबाट उद्‌घाटन गरी शुभारम्भ गरियो । त्यसैअवसरमा श्रीशारदादेवीले प्रार्थना गर्नुभयो कि जगन्माताको पावन आशीर्वाद विद्यालयलाई प्राप्त होस् अनि यहाँ पढ्ने केटीहरू आदर्श कन्या वा नारी बनून् । निवेदिताले लेख्नुभएको छ । “भविष्यका सुशिक्षित नारीका लागि श्रीशारदादेवीको आशीषभन्दा बढी म अन्य केही शुभचिन्तनको कल्पना नै गर्न सक्तिन ।

विश्वभरका नारीका लागि उहाँ प्रेरणापुञ्ज हुनुहुन्छ । माता शारदादेवीको यो वचन हामीले कदापि भुल्न सक्तैनौं-शान्ति चाहनेले कसैको निन्दा गर्नुहुँदैन ।



# दुर्बलता नै मृत्यु हो

दुर्बलताको कारण नै मानिस गुलाम बन्छ । दुर्बलताद्वारा नै सबै प्रकारका शारीरिक एवं मानसिक दुःख आइलाग्छन् । दुर्बलता नै मृत्यु हो । लाखौं करोडौं कीटाणु हाम्रो वरपर हुन्छन् तर जबसम्म हामी दुर्बल हुँदैनौ, जबसम्म शरीर उनीहरूका लागि उपयुक्त रहँदैन तबसम्म हाम्रा वरपर घुम्ने तिनीहरूले हामीलाई कुनै हानी पुऱ्याउन सक्दैनन् । यस्ता करोडौं दुःखरुपी कीटाणु हाम्रा वरिपरि किन न मडारियून्, कुनै चिन्ता नगर्नुहोस् । जबसम्म हाम्रो मन कमजोर हुँदैन तबसम्म तिनीहरूको हिम्मत हुँदैन न त हमला गर्ने शक्ति नै उनीहरूसँग हुन्छ । यो एउटा महान सत्य हो कि बल नै जीवन हो र दुर्बलता मरण । बल नै अनन्त सुख तथा अमर शाश्वत जीवन हो र दुर्बलता नै मृत्यु हो ।

हेर्नुहोस्, हामी सबै कसरी शिकारीद्वारा लखेटिएको खरायो झैं भाग्छौं, त्यसकै झैं टाउको लुकाएर खतरारहित भएको अनुभव गर्छौं । त्यसरी नै जसले यो संसारलाई डरलाग्दो देख्दछ, हेर्नुहोस् त्यो कसरी त्यसबाट भाग्ने विचार गर्दछ । एक पटक म काशीको एउटा ठाउँ भएर जाँदै थिएँ । त्यहाँ एकातिर एउटा विशाल तलाउ र अर्को तर्फ एउटा अग्लो पर्खाल थियो । त्यहाँ बाँदर नै बाँदर रहन्थे । काशीका बाँदरहरू ठूलाठूला हुन्छन् र कहिलेकहीँ अति दुष्ट पनि । उनीहरूले मलाई त्यस बाटोबाट जान नदिने पक्का गरे । उनीहरू डरलाग्दो आवाजमा कराउन थाले र आएर मेरो गोडा वरिपरि झुम्मिन थाले । उनीहरूलाई देखेर म भाग्न थालें । म जति छिटो दौडन खो ज्छु उति उनीहरू त्यति नै छिटो दौडेर आई मलाई टोक्न थाले । उनीहरूका हातबाट उम्कन असम्भव जस्तो लाग्न थाल्यो । ठीक त्यसैबेला एकजना अपरिचित व्यक्तिले मलाई बोलायो-'बाँदरहरूसित लड, भीड' र जब म फर्केर उनीहरूको अगाडि खडा भएँ, तिनीहरू पछि हटेर भागे । जीवनमा हामीले यही शिक्षा लिनुपर्छ जुन कुरा भयानक छ उसको सामना गर्नैपर्छ, साहस बटुलेर त्यसको अगाडि उभिनै पर्छ । जसरी बाँदरहरूको अगाडिबाट नहटेर सामना गर्दा उनीहरू नै भागे त्यसरी नै हामीहरूका जीवनमा आइपर्ने जे जति कष्टदायक कुरा छन् तिनको सामना गऱ्यो भने नै तिनीहरू हट्दै जान्छन् । यदि हामीले स्वाधीनता लिनु छ भने प्रकृतिलाई जितेर मात्र त्यो प्राप्त गर्न सकिन्छ त्यसबाट भागेर होइन । काँतर व्यक्ति कहिल्यै विजयी हुन सक्दै

न । हामीले भय, कष्ट तथा अज्ञानसँग लडाइँ गर्नुपर्छ तब मात्र तिनीहरू हामीदेखि भागेर पर हट्छन् । शक्ति, शक्ति नै यस्तो चीज हो जसको हामीलाई जीवनमा अति धेरै आवश्यकता पर्दछ । किनकि हामी जुन कुरालाई पाप या दुःख मानेर बसेका छौँ त्यसको मूलकारण हामीमा रहेको दुर्बलता नै हो । दुर्बलताले अज्ञान पैदा गराउँछ र अज्ञान नै दुःखको उत्पादक हो । उपासनाले हामीलाई शक्ति दिन्छ । फलस्वरुप, दुःख हाम्रा लागि ठट्टाको पात्र हुन्छ । हिंस्रकहरूको हिंसाले हाम्रो हँसी उडाउला तर खुँखार चितुवा आफनो हिंस्रक प्रवृत्तिलाई त्यागेर मेरो आत्माको स्वभावलाई नै ग्रहण गर्न थाल्ने छ ।

हे मेरा युवा मित्रहरू ! तपाईंहरू बलवान बन्नुहोस् तपाईंहरूका लागि मेरा यही उपदेश छ । गीता पाठ गरेरभन्दा फुटवल खेलेर तपाईं स्वर्गको धेरै-धेरै नजिक पुग्नुहुनेछ । मैले बडो साहसपूर्वक यो कुरा भनेको हुँ र यो भन्न आवश्यक पनि छ । यसकारण कि म तपाईंहरूलाई माया गर्छु । मलाई थाहा छ कि कहाँ ठेस लाग्छ । मैले केही अनुभव प्राप्त गरेको छु । बलवान शरीर तथा मजबूत आसनद्वारा तपाईंले गीताको अर्थ राम्रो सँग बुझ्नसक्नुहुनेछ । शरीरमा ताजा रगत भएमा नै तपाईंले कृष्ण भगवानको महान प्रतिभा तथा महान तेजस्वितालाई राम्रोसँग बुझ्न सक्नुहुनेछ । जतिबेला तपाईंको शरीर खुट्टाको बल प्राप्त गरेर बलियोसँ ग उभीन सक्ला, जब तपाईंले आफूलाई मानिस हूँ भन्ने बुझ्नुहुनेछ तब मात्र तपाईंले उपनिषद् तथा आत्माको महिमा राम्रोसँग बुझ्नसक्नुहुनेछ ।

संसारका पाप, अत्याचार आदि जस्ता कुराहरू मनमा नल्याउनुहोस् बरु तपाईं खेद गर्नुहोस् कि संसारमा अझै पनि पाप देखा पर्दैछ । यदि तपाईं जगतको भलो गर्न चाहनुहुन्छ भने त्यसउपर दोषारोपण गर्ने कार्य छोडिदिनुहोस् । त्यसलाई अझै दुर्बल बनाउने काम नगर्नुहोस् । आखिर यी सबै पाप, दुःख आदि के हुन् ? यी सबै दुर्बलताकै फल हुन् । मानिसहरूले बालकैदेखि शिक्षा पाइरहेका छन् उनीहरू दुर्बल छन्, पापी छन् । यस्तो शिक्षाले संसार दिनानुदिन दुर्बल हुँदै जाँदैछ । उनीहरूलाई भन्नुहोस् उनीहरू सबै उही अमृत कै सन्तान हुन् । अरु त अरु, जसमा आत्माको प्रकाश अत्यन्तक्षीण छ उसलाई पनि यही शिक्षा दिनुहोस् । बालककालदेखि नै मष्तिष्कमा यस्तो विचारले प्रवेश पाओस् जसद्वारा उसलाई सच्चा सहायता प्राप्त हुन सकोस् जसले उसलाई सबल बनाओस् जसद्वारा उसलाई केही वास्तविक कल्याण होस् । सच्चिदानन्दको स्रोतमा नै शरीरलाई बगाइदिनुहोस्, मनले सधैं भन्ने गर्नुहोस् 'म नै त्यो हूँ, म नै त्यो हूँ' । 'तपाईंको मनमा दिन रात यही कुरा संगीतको रुपमा झंकृत भइरहोस् र मृत्युको वखत पनि तपाईंको ओठमा 'सोऽहं सोऽहम' खेलिरहोस् । यही सत्य हो । संसारको अनन्त शक्ति तपाईंभित्र नै छ । जो अन्धविश्वासले तपाईंको मन ढाकिरहेको छ त्यसलाई हटाउनुहोस् । साहसी बन्नुहोस् । सत्यलाई चिन्नुहोस्

अनि त्यसलाई जीवनमा परिणत गर्नुहोस् र चरम लक्ष चाहे त्यो धेरै धेरै टाढा र होस् तर उठ्नुहोस्, जाग्नुहोस् र जबसम्म ध्येयसम्म पुग्न सक्नुहुन्न, त्यतिबेरसम्म नरोकिनुहोस् ।

निर्बल व्यक्ति जब सम्पूर्ण थोक गुमाएर आफूलाई कमजोर महशुस गर्छ तब पैसा कमाउन टाउको न पुच्छरको तरिका अपनाउँछ र ज्योतिष आदिको सहारा लिन्छ । संस्कृतमा एउटा भनाई छ । जो डरछेरुवा तथा मूर्ख छ, ऊ भन्छ यही नै भाग्यमा लेखिएको छ । तर बलवान् पुरुष त्यो हो, जो खडा हुन्छ र भन्न थाल्छ- म आफनो भाग्यको निर्माण गर्छु। सामान्यतया उमरेदार मानिस ज्योतिषको सहारा लिँदन। हामीमा ग्रहको प्रभाव पर्न सक्छ तर त्यसको उति धेरै महत्व हामीलाई हुँदन ।

नक्षत्रहरूलाई आउन दिनुहोस्, त्यसबाट के हानी छ र ? यदि कुनै नक्षत्रले हाम्रो जीवनमा उथलपुथल ल्याउँछ भने उसको मूल्य एक कौडी पनि हुँदैन। तपाईंलाई अनुभव हुनेछ कि ज्योतिष एवं यी रहस्यमय वस्तुहरू धेरैजसो दुर्बल मानसिकताका द्योतक हुन्छन् । त्यसैले जब यी कुरा हाम्रा मनमा आउँछन् तब हामीले कुनै डाक्टर कहाँ जानु आवश्यक हुन्छ, उत्तम भोजन र विश्राम गर्ने गर्नुपर्छ ।

म जे जति शिक्षा दिन्छु त्यसका लागि मेरो पहिलो अनिवार्य शर्त यो हुनेछ कि जुन वस्तुबाट आध्यात्मिक, मानसिक, या शारीरिक दुर्बलता पैदा हुन्छ त्यसलाई खुट्टाको बूढी औंलाले पनि नछुनुहोस् । मानिसमा जो स्वाभाविक बल हुन्छ, त्यसको अभिव्यक्ति धर्म हो । असीम शक्ति भएको स्प्रिंग यो सानो शरीरमा फन्को मारेर विद्यमान रहेको छ र स्प्रिंगले आफूलाई फैलाइरहेछ र जति जति यो फैलन्छ, त्यति( त्यति एकपछि अर्को शरीर अपर्याप्त हुँदै जान्छ । त्यसले उसलाई छाडेर उच्चतर शरीर धारण गर्दछ । यही नै मनुष्यको धर्म, सभ्यता या प्रगतिको इतिहास हो । त्यो भीमकाय, बद्धपाश प्रोमिथियस आफैलाई बन्धनमुक्त गरिरहेको छ । यो जहिले पनि बलको अभिव्यक्ति हो र फलित ज्योतिषजस्ता सबै कल्पनाहरू यद्यपि तिनमा सत्यको एक कण हुन सक्छ-लाई टाढै राख्नुपर्छ ।



# रामकृष्ण भावान्दोलनः यसको दूरदृष्टी, संकल्प र उद्देश्य

## स्वामी प्रभानन्द

श्री रामकृष्ण देवको जीवनी र उपदेशबाट प्रेरित भई रामकृष्ण मठ प्रभुको सन्देश सिधा प्रसारण गर्नमा लागिरहेको छ। साथै रामकृष्ण मिसन त्यस्ता देवताहरुलाई सेवा प्रदान गरि रहेको छ जसलाई अज्ञानतावश मानिस भन्ने गरिन्छ। श्री रामकृष्णको जीवनी र उपदेशहरु यी संस्थाहरुको माध्यमबाट देशभित्र र बाहिर चौतर्फी रुपमा प्रचार प्रसार भैरहेको छ र यसलाई रामकृष्ण आन्दोलन पनि भनिन्छ।

यस आन्दोलन अन्तर्गत दूरदृष्टी, संकल्प र उद्देश्यहरु छन राजनैतिक आन्दोलन भन्दा विल्कूले फरक यस आन्दोलनले समाजमा जरैदेखि आमूल परिवर्तन ल्याउन र व्यक्तिहरुलाई परिवर्तित हुन सहयोग गर्दछ।

**दृष्टि र संकल्पः**

भारतीय संस्कृतिको एउटा अद्भुत योगदान भनेको विविधतामा एकत्व अर्थात् विभिन्नताबीच सामञ्जस्यता हो। अरु कुनै पनि संस्कृतिमा विभिन्नताहरुलाई तालमेल गरी सामाजिक समन्वय कायम गरिएको पाइँदैन। नैतिक, भाषिक, धार्मिक, शारीरिक कुनैमा पनि सवल र स्थिर एकता हासिल गर्न सहज पनि छैन।

भारतीय ऋषि भविष्य द्रष्टाहरूले त्यस्तो एकत्व भावको पहिचान गरेका थिए। यो सैद्धान्तिक रचनाको अतिरिकत होईन, मानवभित्र अवस्थित आत्मशक्तिको बोधबाट मात्र सम्भव हुन्छ। स्वामी विवेकानन्दले धेरै थरि विभिन्नतामा एकताको परिकल्पना गर्नुभएको थियो। उहाँको जीवन लक्ष्यको सवालबारे सिष्टर निवेदिताले दुई प्रयोजनहरू किटान गर्नुभएको थियो। संसारलाई गतिशील गराउने र राष्ट्र निर्माण गर्ने। त्यस उच्च आर्दशको मुलभूत सारांश हो, प्रत्येक मनुष्यको अन्तर्आत्माको देवत्वलाई प्रत्यक्षरुपमा स्पष्ट पार्नु र उसको चिन्तन र विश्वास सम्बन्धमा पूर्ण र



बेलूरमठको यस स्थानबाट ज्ञान, भक्ति, योग र कर्मजस्ता चार आदर्शहरू उद्भासित हुनेछन् । यस मठलाई हामी सर्वधर्म समन्वयको एउटा विशाल केन्द्रका रुपमा स्थापित गर्ने छौं । यी सबै आदर्शहरूको व्यक्त प्रतिमूर्ति हुनुहुनेछ श्रीरामकृष्ण परमहंस । यदि हामीले समन्वयको यो आदर्शलाई जीवन्त राख्न सक्यौं भने उहाँ यस धरातलमा प्रतिष्ठापित भइरहनुहुनेछ ।–स्वामी विवेकानन्द

स्वाधीन अधिकार स्वीकार गराउन यसले इष्टनिष्ठताको बृहत् अवधारणा ल्याएको छ । नदेखिने तैपनि प्रभाव पार्ने यस धारणाले विश्वको समग्र चिन्तनमा नै क्रान्ति ल्याएको छ । तर पनि कुन बेला यस्तो भयो कसैलाई थाहै भएन । वेदान्त दर्शनले अपरिमीत परब्रह्मसँग मनुष्यको एकत्व छ भन्ने कुरा बताउँदछ साथै विभाजन र असमानताको मनोभावलाई अस्वीकार गर्दछ । प्रत्येक व्यक्तिले सबै धर्मभित्र रहेका आधारभूत सत्य कुराहरूलाई मानसिक रुपबाट ग्रहण गरी तर्कसंगत रुपले स्वीकार

गर्न तथा आत्मसात् गर्ने कोशिस गर्नु पर्दछ । के यो ज्यादै आदर्शवादी भयो त ? यस्तो लागेता पनि यो अनुशरण गर्न योग्य छ ।

हेनरी जेम्स लेख्छन्-सत्यमा आधारित भई हेर्दा विचारहरू शक्तिका स्रोत हुन् । व्यक्तित्वको प्रभाव पनि अनन्त छ । यी दुवैको योगबाटै इतिहास बन्दछ । श्री रामकृष्णको सम्बन्धमा हामी स्वामी विवेकानन्दका दृष्टिकोणहरू मनन गर्न सक्तछौं । उहाँ भन्नुहुन्छ हाम्रा प्रत्येक कामले देखाउँदछ कि हामी आधारभूत सिद्धान्त त्यसबेला मात्र बुझ्न सक्दछौं जब त्यो कुनै खास व्यक्तित्वबाट प्राप्त हुन्छ । यस कुराको उदाहरण हामी श्री रामकृष्ण देवले कामिनी र काञ्चन त्याग सम्बन्धमा दिनुभएको उपदेशबारे चर्चा गरी व्यक्त गर्न सक्दछौं

साथसाथै स्वामी विवेकानन्द हामीलाई सावधान गर्दै भन्नुहुन्छ सबैजसो महात्माका चेलाहरूले एकै पटकमा उँहाहरूको विचारलाई उहाँहरूका प्रायः व्यक्तित्वसँग छुट्याउनै नसक्ने गरी मिसाउँदछन् र अन्त्यमा उहाँका विचारको हत्या गर्न पुग्छन् । उहाँले पटक पटक दोहोऱ्याएर हामीलाई बसतर्फ सचेत गराउनु भएको छ । स्वामीजी पनि यी दुईबीचको समन्वयबारे भन्नुहुन्छ मानिसको निजी विशिष्टता तीन भागको दुई भाग हुन्छ भने उसको बुद्धिबाट उत्पन्न कथनहरु एक तिहाई हुन्छन् । हामीले देवपुरुषको चिन्तनलाई आत्मसात गर्नुपर्दछ । हामी उहाँको व्यक्तित्वबाट प्रेरित हुनुपर्दछ । त्यतिले मात्र पुग्दैन । स्वामीजीको शब्दहरूलाई सम्झिनुहोस्, उहाँले ९-८-१८९५मा इ.टि. स्टर्डीलाई लेख्नुभएको थियो तर रामकृष्णले हामीलाई इच्छा शक्ति नामक एक ठूलो उपहार दिनुभयो जसको अर्थ हुन्छ आजीवन संघर्ष गर तर एक्लै नगर र सधैं एउटा सक्रिय जीवन जीऊ । सक्रियरुपमा जीउनुको आदर्शलाई व्यवहारमा उतार्नु नै अत्यन्त महत्वपूर्ण हुन्छ । व्यवहारको एक औंस दश टन भाषण भन्दा ठूलो हुन्छ । पुरुष वा स्त्री दुवैको लागि सबैभन्दा ठूलो धन भनेको नै चरित्र हो । परिपक्व चरित्रको लागि आफूमा दृढ संकल्प हुनुपर्दछ । त्यस मार्गमा आइपर्ने प्रलोभनहरूलाई जित्नु पर्दछ । यहाँ एउटा उदाहण दिँदै स्वामीजी निवेदितालाई भन्नुहुन्छ हामी सत्यमा रहौं । हाम्रो जिन्दगीको नब्बे प्रतिशत ऊर्जा अरुहरूलाई हामी जो होइनौं सो हौं भन्ने बिचार गराउनमा नै खर्च गर्दछौं । यदि हामी जो हुन इच्छा गर्दछौं त्यो भएर देखाउन सकेको भए त्यो ऊर्जा ठीकसंग खर्च गर्न सकिन्थ्यो ।

हामी संस्मरण गरौं कि स्वामीजीको उद्देश्य मानिस भनिनलायक एउटा गुणी, सही र पूर्ण व्यक्तित्वमा विकसित मानव बनाउनु थियो ।

**तिम्रो मानवत्व अभिव्यक्त गर**

मानव ईश्वरको अद्भुत सृष्टि, देवत्व र पशुत्वको एक सम्मीश्रण हो । प्रत्येक मानवको लागि सम्भाव्य सीमाभित्र रहेर बर्तमानमा अझ सुयोग्य तबरले आफूलाई

विकास गराउने अवसर रहेको हुन्छ । बन र बनाऊ यो हाम्रो आदर्श वाक्य होस् । कसरी असल बन्ने, कसरी शुद्ध बन्ने र कसरी अरुको भलो गर्ने यही नै मुख्य कुरा हो ।

श्री रामकृष्ण र स्वामी विवेकानन्दले ऋनव समाजलाई एउटा नौलो दिशा, एउटा नौलो सत्यसहितको धार्मिक सन्देश दिनुभएको छ । स्वामी विवेकानन्दको शब्दमा जसले गरीब, कमजोर र रोगीमा शिव देख्दछ, उसले पवित्रताका साथ शिवको पूजा गर्दछ र जसले मूर्तिमा मात्र शिव देख्दछ उसको उपासना प्रथम चरित्रको र प्रारम्भिक मात्र हो । जसले एउटा गरीब व्यक्तिको सेवा गर्दछ, मद्दत गर्दछ शिव नै देखेर जाति वा सम्प्रदाय वा नश्लको विचार गर्दैन उसँग शिव बढी खुशी हुनुहुन्छ । शिवलाई मन्दिरमा मात्र देख्नेसँग उहाँ खुशी हुनुहुन्न । श्रीरामकृष्ण र स्वामी विवेकानन्दको क्रियात्मक असामान्य प्रतिभाबाट उत्पन्न भएको यो एउटा क्रान्तिकारी विचार हो् ।

डिसेम्बर ३ २०१० मा, काटमाडौं स्वामी प्रभानन्द, महासचिव, रामकृष्ण मिशन र मठ, बेलूर को दिव्य बक्तव्यबाद उद्धृत गरिएको ।